



| | |
|---|---|
| **प्रकाशक** | : अनलाइन नेपाली साहित्य मञ्च<br>www.sahityaGhar.com |
| **सर्वाधिकार** | : लेखकमा |
| **संस्करण** | : प्रथम, २०६४ (२००७ अक्टोबर) |
| **प्रकाशित सङ्ख्या** | : २००० प्रति |
| **टाइपिङ** | : भोजकुमारी लिम्बू |
| **सेटिङ** | : अम्लारी कम्प्युटर |
| **आवरण** | : आइडियल डिजाइनर्स |
| **मुद्रण** | : इन्द्रेणी अफ्सेट प्रेस |
| **वितरक** | : दुर्गा न्युज एन्ड बुक्स डिस्ट्रिव्युटर्स,<br>फोन नं० ०१-४२४४०९२,न्युरोड |
| **मूल्य** | : रु ६०।-, £3 |

---------------------------------------------------------------------.

ISBN : 978-9937-2-0022-6


DESH BOKNUKO PEEDA

A Collection of articles about experiences

by Biswasdip Tigela
E-mail: biswas@post.com,
Website: www.biswas.com.np/creation

# बुझ्नेलाई शिक्षा नबुझ्नेलाई सतर्कता : देश बोक्नुको पीडा

(१)

'लाहुरे' शब्द अत्यन्त प्यारो छ नेपाली संस्कृतिमा । यो शब्दले नेपाली जनजीवनसँग लामो यात्रा गरेको छ । सेनामा भर्ती हुन लाहोर जाने चलन थियो । लाहोर जानेलाई लाहोरे भन्दाभन्दै अपभ्रंस भएर लाहुरे बन्न पुगेको यो शब्दसँग हाम्रा नवयुवाहरूको अनुहार झलल आँखामा नाँच्न आउँछ । २०/२२ का युवकहरू कठोर तालीममा सहभागी हुँदै परदेश लाग्छन्, रोजगारीको भेलमा तैरिँदै । गरिबी र बेरोजगारीको यो कहालीलाग्दो जङ्गलबाट फुत्कने हतार उहिले देखिको थियो हामीलाई । भारतीय र बेलायती सेनामा नेपाली युवाहरूको उपस्थिति विश्व सेनाको इतिहासमा सम्मानजनक र बहादुरीपूर्ण छ । सानो देशका युवाहरूले विदेशी सेनामा भर्ना भएर पनि जुन इमान्दारी र बहादुरीका साथ आफ्नो भूमिका निर्वाह गरेका छन्, त्यो राष्ट्रको निम्ति पनि गौरवपूर्ण छ । जस्तो वातावरणमा पनि मिल्नसक्ने सहज बन्न सक्ने, दुःख गर्न सक्ने र इमान्दारीताका हरेक परीक्षामा उर्त्तीण हुनसक्ने गोर्खाली सेनाहरूको सैनिक इतिहास गौरवशाली छ ।

'लाहुरे' शब्दले सानैदेखि मलाई अनौठो प्रभाव पारेको छ । हाम्रो गाउँबाट पनि लाहुरमा गएकाहरू थुप्रै थिए । पल्टने पनि भन्थे उनीहरूलाई । उनीहरू २/३ वर्षमा छुट्टीमा घर आउँदा के-के थुप्रै सरसामानहरू ल्याउँथे, रेडियो ल्याउँथे, फोटो खिच्ने ल्याउँथे । हिन्दी, अङ्ग्रेजी गीत गाउँथे । कसैले देशी बोली बोल्थे । 'साला पहाडमैं क्या है !' मीनबहादुर विष्टले लेखेको यो कविता एउटा लाहुरे जीवनको नमूना अभिव्यक्ति लाग्छ मलाई ।



मेरा पनि केही साथीहरू लाहुर गएका छन् । छुट्टीमा आउँछन् र अनेक संस्मरणहरू सुनाउँछन् । शरीरको रौं नै ठाडो-ठाडो हुने जीवनका कहालीलाग्दा अनुभवहरू बताउँछन् उनीहरू । लाहुरेको बारेको धारणा तर पछि नराम्रो गरी बिग्रियो मेरो । मैले जब 'शिरीषको फूल' उपन्यास पढेँ, त्यस उपन्यासको नायक 'सुयोगवीर' को कथा पढेपछि लाहुरेप्रति किनकिन नराम्रो भाव पलाउन थाल्यो । तर जब भारतीय सेनामा कार्यरत मेरो मित्र रुद्रगोपाल शर्मासँग बसेर कुरा गरेँ र उनका अनुभवहरू सुनेँ, मलाई सुयोगवीर एउटा व्यक्ति लाहुरे मात्र हो भन्ने बोध भयो । वेलायती सेनामा पनि छन् मेरा साथीहरू । उनीहरूले चिठ्ठी पठाउँछन्, इमेल गर्छन्, फोन गर्छन् र आफ्ना अनुभवहरू सुनाउँछन् । घर आउँदा उनीहरूसँग भेट्न हतारिन्छु म । संसार घुमेका उनीहरूको अनुभवलाई घर बसीबसी बुझ्ने प्रयत्न गर्छु ।

पहिलो कालमा आएर लाहुरेप्रतिको मेरो धारणा झन् विकसित र सकारात्मक भएको छ । लाहुरबाट फर्केकाहरूले जब त्यहाँको जीवन र अनुभवलाई सञ्चार माध्यमहरूबाट, पत्रपत्रिका र पुस्तकहरूबाट सार्वजनिक गर्न थाले, लाहुरेमाथिको मेरो रुचि र चासो अझ बढ्दै गयो ।

पछिल्लो कालमा लाहुर जानेहरूमा पढेलेखेका र बौद्धिक युवाहरूको सङ्ख्या बढ्दै गएछ । अघिल्लो पुस्ताहरूको कथाजस्तो संस्मरणहरू सुनाउँथे, तिनीहरूका बारेमा अरूले नै लेखिदिन्थे । अरूले लेखिदिएकोमा लेखकीय कल्पना र ज्ञानको सीमितता छर्लङ्गै झल्किन्छ तर पछिल्लोकालमा 'लाहुरे' हरू आफैं लेखक छन्, आफ्नो बारेमा आफैं लेख्न थालेका छन् । बहालवाला वा सेवा निवृत्त, उनीहरूले मन खोलेर आफ्नो जीवनको सबैभन्दा महत्वपूर्ण र उर्जाशील जीवनको अनुभवलाई लेख्ने गरेका छन् । कथा, कविता, उपन्यास, संस्मरण आदि वभिन्न विधामा नेपालबाहिरको जीवनलाई र सेनाभित्रको यथार्थतालाई कलात्मक पाराले प्रस्तुत गर्न थालेका छन् । लाहुरे जीवनलाई बुझ्न अब हामीलाई धेरै सजिलो भएको छ । नेपाली साहित्यकारहरूले साहित्यका विभिन्न विधाका माध्यमबाट लाहुरे जीवनलाई अत्यन्त सम्मानका साथ सम्बोधन गरेका छन्, तैपनि लाहुरेले नै लाहुरेको कुरा लेख्न कत्तिको तथ्यपुरक हुन्छ भन्ने कुरा उनीहरूको लेखनको अध्ययनले स्पष्टै बुझाएको छ । नेपाली साहित्यमा लाहुरे जीवनमाथि लेखिएको सबैभनदा उत्कृष्ठ उपन्यास हो- चपाइएको अनुहार । चपाइएको अनुहार पढेपछि लाहुरे जीवनको

(२)

भाइ राजकुमार दिकपालले कम्प्युटर गरिएको एउटा कागजको पोको दिँदै भने- "दाइ ! यो हाम्रो परदेशी भाइको एउटा किताव छ, पढेर केही राय दिनु न ।" समातेँ । डेरामा ल्याएर फर्काइफर्काइ हेरेँ, लेखकको नाम कतै पनि छापिएको थिएन । हतारमा लेखकको परिचय पनि दिन भ्याएन छन् उनले । भर्खर काठमाडौँ आएको, व्यवस्थित पनि भइसकेको थिइनँ । तैपनि बेलुकैदेखि पढ्न थालिहालें काम सकिहाल्ने हतारले । दिमागमा आग्रहहरू थिए- लेखकको नामै पनि थाह छैन... के नै लेखिएको होला र ? आदि ।

पढ्न थालेँ, बस्तुताको स्थितिबाट । कृति संस्मरणात्मक यात्रासँग जोडिएको, सातवटा विभिन्न शीर्षकहरूले भरिएको । विदेशमा लाहुरे जागीर खाने मान्छेले जागीरका क्रममा देखेभोगेका र घुमेका ठाउँहरूको विषयमा आफ्ना अनुभव र अनुभूतिहरू समेटिएको ।

पहिलो पृष्ठले नै ध्यानलाई निक्कै समातिहाल्यो । भाषा, प्रस्तुतिकला, विषयवस्तुको छनौट, भावसौन्दर्य आदि कुराले नाम थाह नभएको लेखकसँग कताकता नजिकजस्तो भइहालेछु । थाहै भएन छ, हेर्दाहेर्दै अन्तिम पातो पनि पल्टिसकेछ । संस्मरणात्मक यो कृति आख्यानात्मक हुँदै गई पाठकको मनसँग घनिष्ठ हुन आइपुगिहाल्छ । एकदम नै परिपक्क र अनुभवी कलमले गम्भीर लेखकीय जिम्मेदारीका साथ लेखिरहेको देखिन्छ पानैपिच्छे वाक्यहरू ।

'देश बोक्नुको पीडा' शीर्षकको यस कृतिले प्रथम पृष्ठबाटै त्यो पीडाको अभिव्यक्ति गर्न थालेको देखिन्छ । 'सधैँ मन घोच्ने केही गुनासाहरू' शीर्षकको लेखमा हाम्रो देशको अन्तर्राष्ट्रिय विमानस्थलको अव्यवस्था र दिग्दारलाग्दो व्यवहार को नाङ्गो चित्रण गरिएको छ । तुलनात्मक रूपमा हाम्रो देशभन्दा पनि गरिब र अव्यवस्थित मानिएका अफ्रिकी मुलुकका विमानस्थलहरूको व्यवस्थापनको तुलना गर्दै विदेशीका अघि आफ्नो देशको यो रूपबाट लज्जित भएको अनुभव प्रस्तुत गरी कृतिका सुरुवात गरिएको छ-

"बाहिर केही ठाउँको यात्रापछि काठमाडौँ त्रिभुवन विमानस्थलमा आइपुग्दा साँच्चै नै घरबाट गोठ पुगेझैँ लाग्छ ।"

यो वाक्यले मनलाई नमीठो गरी छुन्छ । कुनै विदेशीले भनेको भए त्यसलाई हामी ढुङ्गा हान्थ्यौँ, त्यो पत्रिका हामी जलाइदिन्थ्यौँ । त्यस अभिव्यक्तिका विरुद्ध नारा जुलुस गर्थ्यौं, रत्नपार्कका बारहरू भाँच्थ्यौँ र केही घरका झ्यालहरू ढुङ्गाले



धनकुटामा पढी हुर्केको, काठमाडौँका गल्लीगल्ली पत्रकार भएर कुनै कालमा भौतारिएको । अरू देश घुमेर आफ्नो देशमा फर्किंदा घर आइपुगेको खुशी व्यक्त गर्न नपाएको हाम्रै 'छोरा' को अभिव्यक्ति हो यो ।

हामी यही बसिरहेकाहरूलाई दिनदिनैको व्यवहारले सब स्वभाविक र सहज लागेको हुन्छ । जस्तो कि काठमाडौँको फोहोर नगनाउनु, यहाँको दलालीले चित्त नदुख्नु, दिनदहाडै लुटपाट हुँदा अस्वभाविक नलाग्नु, पर्यटकलाई पशुपतिको बाँदरले भक्तको झोला झम्टेझैँ झम्टनु, हामीलाई सनातन अनुभूत हुनु आदि ।

पहिलो लेखले नै थपक्क तानिहाल्यो, मन दुखायो, लाज लगायो, के-के भयो के-के ।

कृतिको दोस्रो लेखदेखि लेखक विदेशिएका छन् । खास गरी द्वन्दग्रस्त क्षेत्रहरूको भ्रमणमा केन्द्रित रहेको यसका संस्मरणहरू ज्यादै भावुक र संवेदनशील छन् । लेखकले समातेको संवेदनाको पक्ष नै यसको पाठकीय आकर्षण हो । संसार मा मानवताको अवस्थाको यो चित्रणले हाम्रो देशभित्र बगिरहेको नकारात्मक अन्तर्प्रवाहसँग साक्षात्कार गराउन खोज्छ । के हामी पनि 'कोसभो' तिरै जाँदैछौँ त ? त्यहाँभित्र भएको जातीय दङ्गा र सङ्घर्षबाट प्रत्येक व्यक्तिले पाएको दुःख अनि विदेशी सेनाहरूबाट पालित हुनुपर्ने उनीहरूको अवस्था पढ्दा आङ जिरिङ्ग हुन्छ । आज हाम्रो मधेसले बोलिरहेको भाषा, पूर्वी पहाडले बोलिरहेको शब्द, पश्चिम तराइले गाइरहेको भाका के 'जिउँदी आमको चिहानको तयारी' गर्ने छोरोको अवस्थातिरै होइन र हाम्रो यात्रा पनि ।

'कोसभोका अल्बेनियाली र सर्बियाली बस्तीका छरछिमेकबीच युद्ध चलेको बेला छिमेकीले तिमी डराउनु पर्दैन, कसैले केही गर्दैन यही बसौँ भनी अनुरोध गर्थे र अर्को हूल आएर लथालिङ्गै मारेर जान्थे । वाफ रे ! कस्तो नियति, कस्तो संवेदनहीनता !! कुनै बेला मेरो देश नेपालमा पनि यस्तै पो होला कि भनेर अत्यास लाग्दो पीर मलाई हुन्छ ।' हे ! भाइ तिमीलाई लाग्ने पीरको थालनी भइसक्यो । पश्चिम तराईको कपिलवस्तु जहाँ स्वयम् बुद्ध जन्मेका थिए, हो, त्यहीबाट सुरु भइसक्यो जातीय र धार्मिक नरसंहारको यात्रा । लाशहरूको गन्ती वेकार हुन थालिसक्यो ।

अरू तल लेख्छन् -

"बोस्नियाको साम्प्रदायिक लडाइँमा यति विघ्न मान्छे मारिएछ कि एउटा गाउँका सबै छोरा मान्छेहरू मारिएछन् । हामी त्यहाँ पुग्दा धेरै मान्छेहरू भेला भए । भेला भएका मध्ये एकजना बूढोबाजेबाहेक सबै छोरी मान्छे र त्यसमा पनि प्रायः युवतीहरू थिए ।" पढ्दापढ्दै डर लाग्दै गयो मनमा । यथार्थको यस्ता

नाङ्गो तस्वीर हेर्नै गाह्रो । जातीय र साम्प्रदायिक दङ्गाको यो कहालीलाग्दो दृष्य आफ्नै आँगनमा पनि कताकता देखापर्न थालेर होला, प्रत्येक पना तर्साउन पल्टिँदै गएझैँ भए ।

केन्याको यात्रा थलो अफ्रिकी राष्ट्रहरूको जनजीवन, आर्थिक अवस्था, त्यहाँको गरिबी, अशिक्षा र एड्सग्रस्त समाजको चित्रण छ । डरलाग्दो छ, फेरि कहाली लाग्छ । बाँच्नु नै बेकारजस्तो देखिने त्यो समाजको दुःख र भौगोलिक चित्रण देख्दा हाम्रो हिमाली राज्यको सौन्दर्यलाई च्याप्प अँगालो हाल्न मन लाग्छ । लेखकका अक्षरसँगै केन्या पुगेको म पाठक ठाउँठाउँमा निसासिएको छु, आँत्तिएको छु, दिग्दार भएको छु । यो कृतिकै सबैभन्दा लामो यस संस्मरणले दक्षिण अफ्रिकी जीवनको पीडासँग अत्यन्त नजिक पुऱ्याउन खोज्छ । प्रत्येक गरिब, अविकसित र समस्याग्रस्त राष्ट्रहरूको चित्रणसँग आफू र आफ्नो राष्ट्रलाई जोड्न मन लाग्नु ज्यादै दिग्दार हुन्छ मन । हामी पढ्नेलाई त यस्तो लाग्छ, देख्नेलाई कस्तो भयो होला !

"हामी जर्मनीका, साइप्रसका, फिजीका, घानाका, नेपालका, जिब्राल्टाका आपसमा सौहार्दपूर्ण वातावरणमा गफ गरिरहेका हुन्थ्यौँ । त्यसैले मलाई लाग्यो गरिब देशको दुःखी नागरिक हुनुमा बढी मानवतापन हुन्छ ।" लेखकको यो अनुभूति यहाँ फेरि बेग्लै देखिएको छ । धनी देशका नागरिकहरूमा पाइने अहम्, निष्ठुरता, अरूप्रतिको तिरस्कार आदिबाट उनले गरेको यो अनुभव । दुःखीले नै दुःखीको कुरा बुझ्छ भन्ने यो एउटा प्रमाण हो । विदेशमा पनि आफन्तहरूको खोजी गरिरहनुपर्छ परदेशीले । आफन्त खोज्दै जाँदा उनी पुगेछन् गरिबहरूकै भीडमा ।

एउटै यात्राका दुईवटा संस्मरण पनि पढेँ मलेसियासँग जोडिएका । गुफाहरूको राजधानीका रूपमा सम्बोधन गरिएको 'मुलू यात्रा' रोचक र जिज्ञासामुलक छ । कौतुहलपूर्ण यात्रा विवरण छ यो । अलिक मनोरञ्जन र रमाइलो पनि लाग्यो । अरू लेखहरूभन्दा यी दुईले केही चङ्गा पनि बनाए । सुरुदेखि नै भावुक, गम्भीर र संवेदनशील बन्दै आइरहेको यो यात्रामा आइपुग्दा केही राहत महसुस भएको लाग्यो । तर गुफा सम्बन्धी कौतुहलताले पाठकीय मन चञ्चल हुन्छ जहाँ पनि । विश्वकै सबैभन्दा ठूलो गुफा सारवाक च्याम्बर रहेछ, जसभित्र १६ वटा फुटवल मैदान अर्थात् ६० वटा जेट विमान राख्न सकिन्छ भनेको सुन्दा अलमल्ल भएँ । त्यो त एउटा जिल्ला भयो नि केको गुफा ? तर जमीनमुनी यत्रो कसरी ठाडिएर रहेको होला भन्ने लागिरह्यो पढुञ्जेल ।

मैले त पहिलो पल्ट गुफा वा ओढार देखेको भनेको इलामको सिद्धेथुम्का गा० वि० स० को 'गते ओडार' हो । २०४३ सालमा जागीरको सिलसिलामा फिल्ड भ्रमणमा जाँदा छिरेको त्यहाँ । त्यस ओढारसँग २०३६/३७ सालतिरको कम्युनिस्ट



आन्दोलको एउटा कथा जोडिएको छ । युवा वामहरूले एकै रातमा एउटा खेतको सप्पै पाकेको धान काटी, माडी त्यस गुफामा ल्याई लुकाएका थिए रे । एकै रातमा त्यत्रो धान कसले, कसरी, कहाँ लग्यो भन्ने ठूलो जिज्ञासा र खोजी भएछ कैयौँ दिनसम्म । पछि अनेक सुराकीका माध्यमले प्रशासनले फेला पारेछ । अर्थात् 'गते ओढार' पनि निकै ऐतिहासिक थियो, त्यसैले पनि मलाई गाउँले साथीहरूले त्यहाँ पुऱ्याएर भित्रसम्म छिराएका थिए । विस्तारै निहुँरिएर, धारिलो, कोल्टो हुँदै छिर्नुपर्ने त्यो ओढार (गुफा) को अनुभव भएको मैले ६० वटा जेट विमान अट्ने कुरा सुन्दा अलमल्ल पर्नु स्वभाविकै छ नि !

यस्ता प्राकृतिक रहस्यहरूले सहजै ध्यान तान्दो रहेछ । यो कृति पढ्दा मुलू गुफाको यात्रा संस्मरण प्रकृतिको रहस्यमय निकटतामा पुऱ्याउने राम्रो लेख भएको छ । भिन्दाभिन्दै शीर्षक - उपशीर्षकमा सम्पन्न यस यात्रामा त्यहाँका आन्तरिक पीडा र समस्याहरूको झलक दिन लेखक चुकेका भने छैनन् । एकदमै नै रहस्यमय, तलको संवादले त्यस देशका स्थानीय श्रमिकहरूको मानसिक अवस्थाको चित्रण गर्छ । जस्तै :

एउटी वेटर बहिनी केही खानुहुन्छ कि भन्दै अर्डर लिन आइन् । उनको नाम फिफी हो ।

"हिजोको साथी कहाँ छिन् ?" मैले उनलाई सोधेँ ।

"उनले त कामबाट राजिनामा दिइन् ।" ती बहिनी बोलिन् ।

मैले थपेँ- "किन ?"

"किनकि ऊ यहाँको स्थानीय हो ।"

"स्थानीय मान्छेले काम गर्नु त झनै राम्रो होइन र ?"

उनले उत्तर दिइन- "म लावस भन्ने ठाउँबाट आएको, म पनि स्थानीय भए राजिनामा दिन्थेँ ।" उनको उत्तर मलाई बुझ्न गाह्रो भयो । त्यो भन्दा बढी सोध्ने साहस गरिनँ ।

यो माथिको संवादले मलेसियामा श्रमिकहरूमाथि कस्तो व्यवहार हुन्छ र कत्तिको शोषण हुन्छ भन्ने एउटा नाङ्गो उत्तर आउँछ । हुन त लेखकले त्यो सप्पै कुरा खोल्न खोजेका छैनन् तर लावसबाट आएकी हुनाले उसले जति अन्याय र दबाब सहेर पनि जागीर खानुपर्ने बाध्यता रहेछ फिफीको तर अर्की स्थानीय स्वाभिमान केटीले सहन सकिन छोडिदिई काम । यहाँ मन चिउचिउ हुन्छ । हाम्रा

भएर लाश हुँदै पनि आइरहेकै छन् । सुन्दरताभित्र लुकेको कुरूपतालाई कति सजिलै समात्न सकेको उनले । लेखकको विशेषता भन्नु पनि यही हो सायद ।

"यु गट ग्रिन पासपोर्ट, सो द्याट नट एलाउट टु इन्ट्री मेक्सिको ।"

यो कृतिको सबैभन्दा दिग्दारलाग्दो र मन छुने वाक्य हो यो । मन नै कस्तो 'चिसो' हुने सुन्दा पनि । लेखक झन् कुरा यसरी तन्काउँछन् ।

"हरियो पासपोर्ट भएको कारणले मेक्सिको जान नपाउने उसको आदेशले हामी छाँगाबाट खसेझैं भयौं । हामीसँगै चढेका बसमा सँगै काम गर्ने ब्रिटिस साथीहरू र केही अमेरिकनलगायत थुप्रै यात्रुहरू थिए । बसको सीटमा सँगै बसेकी खैरो कपाल भएकी अमेरिकी लिसा पनि काङकुङ नै लागेकी थिइन् । फर्स्याइली लिसा यात्राकै क्रममा निकै हितैषी बनिसकेकी थिइन् । उनीसँग अमेरिकी पासपोर्ट भएकाले बसबाट ओर्लनु परेन । "एकैछिन्मा फर्कन्छु" भनी म उनीसँग विदा भएर इमिग्रेसनतर्फ लागेको थिएँ । अफसोच फेरि उनीसँग कहिलै भेट भएन । बसमा सँगै यात्रा गरेका अन्य देशका साथीहरू विनारोकटोक काङकुङतर्फ लागे तर हामी भने डिच्च पर्दै फर्कियौं ।

मुलू यात्राको सन्दर्भमा पनि उनले हरियो पासपोर्टबारे मन दुखाउँदै लेखेका छन् :

"हरियो नेपाली पासपोर्ट बोकेर विश्वको विभिन्न मुलुकमा पुग्दा पाइने दुःख अपमानले हिनताबोध हुन्छ ।"

जे होस्, 'देश बोक्नुको पीडा' शीर्षकको यो लेखले गलेर लखतरान परेको यात्रुले अन्तिम विसौनीमा 'फ्यात्तै' भारी बिसाएझैं भएको लाग्छ । हुन पनि त्रिभुवन विमानस्थलको अव्यवस्था र भ्रष्टाचारबाट सुरु भएको वैदेशिक यात्रा आफ्नै देशको 'अविश्वसनीयता' को उपहार बोकेर थाकेको छ ।

हामीले आत्मरतिका साथ देशभित्र जति नै ठूलाठूला गफ गरे पनि, राष्ट्रिय गीत गाए पनि, कवितामा हिमाल उठाए पनि विदेशमा हाम्रो यथार्थ हैसियत भोग्नेहरूको पीडा अर्कै छ ।

'देश बोक्नुको पीडा' शीर्षकको यस कृतिले मनमा ठङ्..ठङ्...ठङ् हानिरहन्छ दुख्ने गरी । यो कृति पढेर देशतिर फर्किन मन लाग्छ, आफूलाई छाम्न मन लाग्छ ।

वैदेशिक रोजगारीमा जानेका अनुभव बेग्लै होलान्, टुरिस्ट भिजामा जानेको अनुभव वेग्लै होलान्, लाहुरमा गएका यी भाइका अनुभवचाहिँ विशेष सन्देशवाहक





वास्तवमै यो सानो नियात्राकृतिले पाठक मनलाई हल्लाउँछ । लेखक साह्रै जिम्मेदार र सचेत छन् । उनले यात्राका अनेक काम नलाग्ने गनथनहरू पाठकलाई भारी बोकाएका छैनन् । संवेदनाका चस्काहरू समेटेका छन् । छिन्छिन्मा लेखकसँगै झस्किन मन लाग्ने गरी आकर्षक भाषा शैलीमा काव्यिक अनुभूतिले सजिएका वाक्य सङ्गठनहरू पठनीय छन् । यस कृतिको सबैभन्दा सफल पक्ष भन्नु मानवताको दूर्दान्त चित्रण हो, जो हाम्रै देशभित्र पनि एउटा त्रासद बिम्बका रूपमा हुर्किँदै गइरहेको छ र यस कृतिले त्यतातिरबाट सतर्क रहन प्रेरित गर्दछ । जातीय सद्भाव र राष्ट्रियताको चेतना बाल्नका निम्ति यो कृति सहायकर देखें ।

हुन त यस अघि पनि उनले यस्तै विषयमा कृति प्रकाशन गरिसकेको रहेछन्, जुक कुरा राजकुमारले मलाई ढिलो जानकारी दिए । यो सामग्री पढिसकेपछि राजकुमारलाई फोन गरें - "हैन भाइ ! यो कस्को के दियौ यार ! पढ्न त साह्रै मन लाएर पढें तर लेखक त चिनिएन, स्वस्थानीजस्तो पो भो त ।" अनि उनले तुरुन्तै लेखकको परिचय सहित 'गृहयुद्धको पीडा' शीर्षकको कृति नै ल्याएर दिए । त्यो पुस्तकको आवरण देख्नासाथ झन् मन खायो । जे होस् राम्रै कलम भएको युवा भाइले विदेशमा लाहुरेको व्यस्त जीवनभित्रबाट यत्रो अनुभूतिलाई सङ्कलित गर्नु सजिलो काम गरेको होइन । 'विश्वास दीप तिगेला' रहेछ यस कृतिका लेखकको नाम ।

भाइ तिगेला ! राम्रो कृति लेखिदिनु भएछ । ठूलो शिक्षा छ बुझ्नेलाई, नबुझ्नेलाई सतर्कता छ । देश बोक्नुको यस पीडाबाट हामी सबैले मुक्ति हुने माध्यम खोज्नुपर्छ- अरूका अनुकरणीय चरित्रहरू सिकेर ।

राजकुमार भाइलाई पनि धन्यवाद, जसले यस कृतिको प्रथम पाठक हुने मौका मिलाइदिनु भयो । नेपाली नियात्रा क्षेत्रमा यो नयाँ कृतिलाई स्वागत गर्दछु ।

- **कृष्ण धरावासी**
dharabasi@yahoo.com

# बघिनीको दूध

**प्रत्यक्ष देखेका, भोगेका अनुभूतिहरूको आलेख 'देश बोक्नुको पीडा' नियात्रा सङ्ग्रह पढ्दा बघिनीको दूध पिएजस्तै मजा आयो । पल्टनमा पनि यस्तो साहित्यिक चिन्तन गरेको कुरो मैले अरू ठाउँमा पढेको थिइनँ । माओत्सेतुङले पल्टनमा बसेर सिकेको सैनिक तालीमलाई उनले क्रान्तिकारी राजनीतिको आधार बनाएका थिए । यो पढ्दा मलाई लाग्यो – तिगेला पनि पल्टनमा साहित्यको क्षेत्रमा देश बोक्नुको पीडाको विरुद्ध युद्धको लागि आफूलाई कुशल शिल्पी बनाउन प्रयत्नरत छन् । यो कुरा यो नियात्राले जब उसको नायकी विद्यार्थी जीवनमा राती दुई बजेसम्म न सुती बसेर मार्क्सवादी दर्शनको अध्ययनमा तल्लीन रहेको पढेको कुरोसित साक्षात्कार हुँदा बढी विश्वास लाग्छ ।** नियात्राले कथाले जस्तै पाठकलाई वास्तविक कथामा डोराउँछ । यौटा हैन धेरै अद्भूत चौरालीहरू कटाएर, समुद्रपार घुमाएर, देश बोक्नुको पीडामा डुबाएर पाठकलाई स्वयम् पात्र बनाएर पागलजस्तो लठ्ठाउछ । मलाई लाग्छ शायद नियात्राको ताकत पनि यही हो कि ! यो भूमिका लेख्न बस्दा यसले मेरै होश पनि जमिनभन्दा ७०० माइलमाथि उठाएको छ । यो बघिनीको दूधले यौटा अर्कै महाभारत लेख्ने कल्पनाको सागरमा पौडाएको छ तर यो सानो मन्तव्यमा म कति नै मात्र पोखिन सक्छु र ! यो बघिनीको दूधले मेरो छाती फुलाएको छ ।

### नाम–

यसभित्र भएका नियात्राहरूमध्ये एक सशक्त नियात्रा हो – **'देश बोक्नुको पीडा'** । यही नियात्रालाई प्रतिनिधि मानेर यो पुस्तकको नामाकरण युक्तियुक्त नै देखिन्छ । यसबाहेक तिगेला यसभित्रका नियात्राभरी प्रवासमा छन् र त्यहाँ उनले



देश गुमाउनुको पीडाको साथमा देश बोक्नुको पीडा पनि बोकेर र भोगेर हिडेका छन् र समग्रमा तिनै अनुभूतिहरूको संवेदनात्मक आलेख नै यो कृति भएकोले 'देश बोक्नुको पीडा' नाम सार्थक छ ।

### तुलनात्मक अध्ययन–

नियात्राले कोरा दृश्य वर्णन नगरेर त्यसले त्यस वस्तुलाई विभिन्न दृष्टिले पर्यावलोकन गर्दछ लेखकले । त्यसमध्ये वस्तुको तुलना पनि महत्वपूर्ण पक्ष हो । त्रिभुवन विमानस्थल र हिथ्रो बिमानस्थलको व्यवस्थाको तुलना गर्दै नेपालको असौन्दर्यलाई हिथ्रोको जस्तो सौन्दर्य थप्नुपर्छ भन्ने तुलना पठनीय छ (संधै मन घोच्ने केही गुनासाहरू) । केन्याको जोत्ने हलो नेपालको भन्दा केही फरक छ र लामो बिंड भएको दाँते कोदाली चलाउँछन (केन्या यात्राः यौटा सुन्दर क्षणको अन्त्य) । मलेसियाको सारबाक राज्यमा हुने डाँडाहरू नेपालको थाम डाँडा जस्ता देख्छन् । यस्तो भावुक तुलना पनि छ (गुफाको राजधानी मुलू यात्रा) । यसरी पाठकलाई आफ्नो देश र परदेशसित अपेक्षाको चित्र दिँदै घुमाउँछ यो नियात्रा सङ्ग्रहले ।

### डायास्पोरा–

कुनै जमानामा **डायास्पोरा** दक्षिणपूर्व एसिया मात्र थियो तर आजको डायास्पोरा साउथइस्ट एसिया बाहिर झाँगिएको छ। यसको प्रमाण बाहिर फैलिएको नेपालीहरूको चाप र यिनको बारेमा साहित्य लेखन थालिएका आलेखहरूबाट नै स्पष्ट हुन्छ। यो कुराको पनि, प्रमाण पनि हो यो नियात्रा सङ्ग्रह । 'गरिब देशको नागरिक हुनुमा बढी मानवता' नियात्रा लेख्छ : 'कहिले काँही नेपाल नै बेलायतमा सऱ्यो कि भनेर ठट्टा गर्न मिल्नेसम्मको हाम्रो उपस्थिति बढेको छ ।' नेपालीहरू बेलायत र वासिङटनका गल्लीहरूमा एकअर्का बोल्न पनि छोडिसके । भन्न पनि यो नियात्रापछि परेका छैन । जे भए पनि नियात्राले अझ सशक्त सङ्गठित भएर अगाडि बढ्न सहयोग पुग्ने डायस्पोराको शक्तिको प्रदर्शन गरेका छन् ।

### पितृदेशको प्रेम–

नियात्रा समग्रमा पितृदेशको सेवा भाव र मातृभक्तिको भावनाले ओतप्रोत छ । तर अन्धो राष्ट्रवादको नारा भने यसमा छैन । नेपालमा भएका राम्रा नराम्रा दुवै पक्षको सुक्ष्म स्पर्श गर्नु यसको धर्म रहेको छ । यहाँ नेपाली प्रवासिन बाध्य

बनाइएको चित्र छ । यो नियात्राको निर्क्यौल हो र त 'राम्रो सपना देखेको रात', नियात्रा भन्छ : 'कसम खान्छु कुनै दिन हाम्रो देशलाई कसैले छिछि नभन्ने गरी विकास गर्नेछौँ ।' पर्यटकीय विकास गरेर देशलाई उठाउन सकिने भावना यसमा प्रखर छ । उनी आफ्नो देशप्रति अत्यन्त भावुक छन् । त्यसैले भन्छन् – जसले देश गुमाएको हुन्छ उसलाई थाहा हुन्छ देश कति प्यारो हुन्छ । देश बोक्नुको पीडा 'बोकेर अर्काको नोकरी गुलामी गर्न आएको मान्छे' भन्छन् पुरानो भाषामा । यसले उनी इमानदारी साथ लेख्छन् : नेपालीको इज्जत छैन कामदारमा तर गोर्खाली भनेपछि सबै डराउँछन् (देश बोक्नुको पीडा) ।' लाखौँ नेपाली विदेश गएर काम गर्छन् । सबले मिलेर 'हाम्रो ज्ञान, शिप, अनुभव र अनुभूतिलाई देश बनाउनमा खर्च गर्नुपर्छ ।' यी कुराको वकालत गर्दै नियात्राले नेपाली राष्ट्र-प्रेम पितृ-देशको ममता जाहेर गर्छ ।

## मृत्यु-बोध–

'कोसोभो यात्राः जिउँदी आमाको चिहान' नियात्रा मान्छेको मृत्यु-बोधको सचित्र उद्‌बोधन हो । तिगेलाले बोजूको कथाको माध्यमबाट स्वयम् लेखकमा भएको मृत्यु-बोधको आँखाले पाठकलाई मृत्यु शाश्वत सत्य हो भन्ने देखेर बाँच्न कति गाह्रो हुन्छ र त्यो दुष्कर कामबाट मान्छे भाग्न सक्दैन । यो उसको नियति नै हो भन्ने कुरा स्पष्ट पारेका छन् । उनकै शब्दमा : 'आफू जिउदो हुँदाहुँदै छोराले चिहान तयारी बनाइसकेकोमा कति चित्त दुख्दो हो, बोजुको ...।' बोजुको यो जरा व्याधि र उनको यो चिहानको नियात्रा लेखेर उनले मृत्यु-बोधकै उत्खनन गरेका छन् । मृत्युबोधले मान्छे हतोत्साहित अकर्मण्य बनाउने पात्र र कथाको नियात्रा उनले लेखेका छैनन् । बरु यो "राम्रो सपना देखेको रात" नियात्रा भन्छ – मनसाय पूर्वक जघन्य अपराध गर्नेहरूलाई मृत्यु-दण्डको सजायको व्यवस्था गरिनुपर्छ । एकजनाको हत्याले करोडौंको भलाइ हुन्छ भने उनी त्यो मृत्यु-दण्ड दिन स्वयं आफैले स्वीकार्न तयार छन् । यसरी यी नियात्राहरू अकर्मण्य चरित्रको व्याख्या र जीवनहीन परिवेशको सिर्जना गर्न भन्दा मृत्यु-बोध गराएर पनि कल्याणकारक समाजको लडाकू परिवेशको वकालत गर्दछन् । शोषणको विरुद्ध युद्ध तर मानवीय सम्प्रेषणको सम्भाव्यताको लागि कृपालु यी नियात्राहरू पढ्दा देशले बिर्सेको अर्को पाटो भेटिन्छ ।



## लेखकका आत्म-स्वीकृतिहरू–

एघारवटा नियात्राको यो रोचक सङ्ग्रहमा पाठकलाई आफ्नो बानी बेहोरा आचरण र उसका जीवनका कथा व्यथाहरू सार्वजनिकीकरण गरेका छन् । जस्तै तिगेला मेक्सिम गोर्गीको 'आमा' उपन्यास र नारायणको पपल्सा क्याफे कोसोभोमा उनी पढिरहेछन् । पोखरामा मार्क्सवाद पढेको देखिन्छ । द्वन्द्वात्मक भौतिकवादी हुन् कि जस्तो लाग्छ, तर उनको गाडी रोकियो र लेख्छन् – 'भगवान्‌का कृपाले गाडी पनि रोकियो ।' ईश्वर मान्नेले जस्तो गरी लेखेको देखिन्छ । जे भए पनि उनमा कार्ल मार्क्सबाट अमिट छाप परेको कुरो भने 'गरिब देशको नागरिक हुनुमा बढी मानवता छ' नियात्रामा उनले स्पष्ट लेखेका छन् : दार्शनिक कार्ल मार्क्स अध्ययन गर्न लाइब्रेरीमा मुर्छा परुन्जेल बस्थे रे, म उनको जीवनदेखि अति प्रभावित छु । त्यसैले लाइब्रेरी मलाई मनपर्ने ठाउँमध्ये एक हो ।' उनी अध्येता हुन् र सैनिकमा गएपछि पनि अध्येता रहेका छन् र सेनामा हुनेलाई अध्ययन अजीवको वस्तु हुन्छ भन्ने उनलाई थियो तर उनले आफू र पाठकलाई स्पष्ट पारेका छन् कि सैनिक संरचना प्रणाली ज्यादै व्यवस्थित र पारदर्शी पनि हुँदो रहेछ । सैनिक जीवन र साहित्यिक भावुकताको संमिश्रण नै हो यो कृति । त्यसैले त तिगेला यो नवौं रसभन्दा अर्को नयाँ रस पिलाउन सफल छन् ।

## भाषा–

तिगेलाको भाषा सशक्त छ । 'बेजोडको सङ्गीतलाई बुझ्नुपर्छ, मादलको तालमा नाच्नुपर्छ (सधैं मन घोच्ने गुनासाहरू) ।' यो अभिव्यक्ति ओजगुणको नमुना हो । ओज मात्र हैन यहाँ प्रसाद गुणले युक्त भाषा पनि सर्वत्र छ । जस्तोः मेरो आँखाचाहिँ लटरम्म फलेका फलफूलहरूमा घुमिरहेको हुन्छ (कोसोभो यात्रा जिउँदी आमाको चिहान तयारी) ।' वर्णन शैली एकदम मीठो छ । उखानटुक्काको प्रयोग गरेर भाषालाई जीवन्तता दिइएको छ । यसमा प्रयोग भएका केही उखानटुक्काहरूः के खोज्छेस् कानी आँखो (केन्या यात्रा यौटा सुन्दर क्षणको अन्त्य) । नामर्दकी जोई हुनुभन्दा मर्दकी रखौटी हुनु बेस (देश बोक्नुको पीडा) । बिम्बहरूको प्रयोगले भाषा अलङ्कृत भएको छ । 'कचौरा' को बिम्ब सिर्जना गरेर उपत्यकाको वर्णन गरेको उपमा अलङ्कार बिम्बको नमुना हो योः 'कचौरा जस्तो एकदमै गोलो प्रकारको डिल र बीचको गहिरो भागमा टम्मै जङ्गल भएको त्यो पहाड हेर्न असाध्य रमाइलो लाग्यो 'केन्या यात्रा – एउटा सुन्दर क्षणको अन्त्य ।'

त्यस्तै 'शङ्खे कीरो', 'फिल्मको कथा' जस्तो जीवन आदि उपमा अलङ्कार र बिम्बका विविध प्रयोग भएका छन् यहाँ । यी अनौटा बिम्बहरूले पनि यस कृतिलाई रोचक बनाएको छ ।

## सूक्तिहरू–

देश बोक्नुको पीडाले अनगिन्ती सूक्तिहरू दिएको छ । जस्तैः

- नमरे बाँचे दैवले साँचे कही त भेट होला ।
- सुन्दर सदा आफूसित न रहने भएकोले नै ती सदा प्यारा छन् ।
- मानिसले जसलाई बढी माया गर्छ, उसलाई हत्या गर्न पनि तयार हुन्छ ।
- संसारमा सबैभन्दा बढी आफ्नै नजिकको मान्छेलाई ढाँटिन्छ ।
- दार्शनिक हुरा पनि ठठौली पारामा भनिन्छ र ?
- माया संसारको सबैभन्दा शक्तिवान् वस्तु हो ।
- मायाले संसारको कुनै पनि वस्तुलाई सम्भव बनाउँछ ।
- मन एक प्रकारको चोर हो ।
- आमाको बढी महत्व त्यसलार्य हुन्छ जसले आमा गुमाएको हुन्छ । राष्ट्र र राष्ट्रियता प्राणभन्दा प्यारो हुन्छ ।
- एकले थुकी सुकी हजारले थुकी नदी ।

## हिलैमा भ्यागुतो बस्छ, हिलैमा कमलस्थिति–

'देश दुख्नुको पीडा' पढेर निक्लँदा म सारवाक च्याम्बरबाट निक्लेजस्तो लाग्यो । पुस्तकबाट म मात्र निक्लिएको थिएन । मेरो साथ सारवाक क्षेत्रको गुफाबाट ३ लाख चमेराहरूको रूपमा विभिन्न संरचनाहरू पनि मसित चिप्किएर आए । अमेरिका पनि कहिल्यै न देखेको त्यति ठूलो ओढार र गहनतम गुफाको दर्शनले यो कृतिहरूको अगाडि मेरो शिर नतमस्तक हुन्छ । पढ्दा पढ्दैको जिन्दगी, साहित्य पुस्तकालयप्रतिको लगाव भएका मार्क्सवादको अध्ययन गर्ने व्यक्तिलाई कुन अर्थपरीले चुँडेर बेलायती सेनामा लगी । स्थानले मात्र के गर्नु, भिन्नै छ गुणको गति भने झै विश्वासले आफू बसेको पल्टनको परिवेशलाई नै नेपाली भाषा र साहित्यको अखडा बनाइदिएका छन् । उनी जहाँ पुगेका छन् त्यहाँ नेपाली भाषा र साहित्य पुगेको छ । तिनैसितको आनन्दानुभूतिहरूको सङ्गालो हो यो नियात्रासङ्ग्रह –'देश बोक्नुको पीडा' कृति जसलाई मैले बघिनीको दूध मानेको छु ।



## उपसंहार–

तिगेलाको यो 'देश बोक्नुको पीडा' नियात्रा सङ्ग्रहले आप्रवासी नेपालीको प्रशस्त दायरा फराकिलो पारेको छ । डायस्पोराको नेपाली भाव र साहित्यको अध्ययनको क्रममा यसको महत्वपूर्ण भूमिका रहन्छ । यसभित्रको भाषा सशक्त छ, देश विदेशको तुलनात्मक अध्ययन, लेखकका आत्म-स्वीकृतिहरू, जनजातीय परिशीलन, मानवताका प्रश्न र मृत्यु-बोध तथा नेपाली राष्ट्रियताको प्रश्नहरूमा यो अनुसन्धेय छन् । नेपाल बाहिर रहेर नेपाल र नेपाली अनि यसको भाषा र साहित्यको प्रश्नलाई लिएर तिगेलाको यो नियात्रा सङ्ग्रहको योगदान स्वागतयोग्य छ र नेपाली साहित्यको नियात्रा फाँटमा यो बघिनीको दूध बनेर तारा जस्तै चम्किरहनेछ ।

**होमनाथ सुवेदी**
अध्यक्ष,
बोर्ड अफ ट्रस्टिज, अन्तर्राष्ट्रिय नेपाली साहित्य
भर्जिनिया, अमेरिका
अक्टोबर ०५, २००७

# पर्दा भित्रबाट

हामी कुनै पनि नयाँ र सुन्दर चीजवस्तु प्राप्त गर्ने र सधैं आफू संगै रहोस भन्ने चाहना राख्दछौं । तर यी सब चाहनाहरू पूराहुन असम्भव छन् । आखिर जिन्दगी जिउनुलाई हो । जिउनेक्रममा दुःख सुखका क्षणहरू बित्दै जान्छन् । प्रकृति दोहोरिन सक्छ तर त्यही समय कदापी दोहोरिन सक्दैन । एकदिन बित्नु भनेको आफ्नो बाँच्ने आयु एकदिन घट्नु हो । तसर्थ बाँच्ने हकमा जिन्दगी नविकरण हुन सक्दैन र जिन्दगी अजम्बरी पनि छैन । त्यसैले जीवनमा घटेका घट्ना परिघट्नाहरूलाई मिठो सम्झनामा च्यापी राख्नु स्वयम् आफैलाई डुब्न लागेको जुनघामझैं उमेरमा यादकारी आनन्द हुन सक्दछ । हो त्यही उमेरको निम्ति यो देश बोक्नुको पीडा नामक फूलको वेर्ना सार्न लालयित भएको छु । यो फूल हुर्कन फुल्न र फल्नको लागि अनुकुल हावापानीमा निर्भर रहनेछ ।

विशेषतः केही वर्षअघि गृहयुद्धका पीडा कृति जन्माएको थिएँ । त्यो मेरो अघिल्लो कृतिले म स्वयम्लाई थप पीडा दियो - कारण पाठक महोदयहरूले मलाई साहित्यकार भन्नुभयो तर म साहित्य सेवक र चिन्तक मात्र हुँझैं लाग्छ । दोस्रो कारण गृहयुद्धका पीडा पुस्तक धेरै पाठकहरूले किनिदिनुभयो । यतिसम्म कि जाडोको बेलामा मेरो आङमा एकसरो तातो लुगाको आगमन भयो । अर्कोतिर पीर पनि बढ्दै गयो । रहरले लेख्ने मान्छेलाई कताकता बाध्यताले घेर्दैछ कि झैं आभाष भयो । यद्यपी यी मेरा सिकारु कलम असल र परिपक्क कलमहरूको शिष्य बन्न भौतारी रहेको छ, सङ्घर्षरत छ । साहित्य सेवामा सधैं क्रियाशील यी मेरा कलम यसपटक अघिल्लो पुस्तकको डामलाई पनि सदर गर्ने प्रयास हो र साहित्यमा निरन्तर लागिरहने प्रतिबद्धता ।

विभिन्न अवसरहरूमा मेरो संलग्नता भएको बेला मैले प्रत्यक्ष देखेको भोगेको, अनुभूत गरेको कुराहरूलाई मैले जस्ताको तस्तै यहाँ नोट गरेको छु । यहाँ साहित्य नभई यर्थाथ विषयहरू मात्र समाविष्ट छन् । तर तपाईं कोही यसलाई साहित्य स्वीकार्नु हुन्छ भने मेरो आपत्तिचाहिँ छैन ।

यो **देश बोक्नुको पीडा**को पनि विभिन्न देशको हिंसा आतङ्क, दरिद्रता, उनीहरूकै नौलो संस्कति र सुन्दरताबाटै गर्भ रहेको हो । यसलाई पुस्तकाकारको रूपमा जन्माउनको लागि सहयोग गर्नुहुने सबै महानुभाव तथा सङ्घसस्थामा हार्दिक आभार व्यक्त गर्दछु । वहाँहरू हुनुहुन्छ - प्रतिलिपि पूरै हेरेर सुझाव र सल्लाह दिनुहुने आत्मीय मित्र प्रहरी उपरीक्षक गणेश ठाडामगर, शुद्धाशुद्धि हेरिदिनुहुने सानोठिमी क्याम्पसका एसिस्ट्यान्ट लेक्चर अमर तुम्याहाङ, विशेष सल्लाह र सुझाव दिनुहुने पत्रकार तथा साहित्यकार राजकुमार दिक्पाल, भूमिका लेखिदिएर मलाई ऋणी बनाउनुहुने मेरा आदरणीय अग्रजहरू वरिष्ठ साहित्यकार कृष्ण धरावासी, राष्ट्रगानका रचनाकार व्याकुल माइला, अन्तर्राष्ट्रिय साहित्य समाज, बोर्ड अफ ट्रस्टी अमेरिकाका अध्यक्ष होमनाथ सुवेदी, मलाई सधैं हरतरहबाट सहयोग गर्नुहुने रेडियो नेपालका रमेश पौडेल, अनलाइन नेपाली साहित्य मञ्चका जितेन्द्र चेम्जोङ, नेपाली कविता डटकमका विक्रम सुब्बा, डा. चन्द्र लक्सम्बा, टङ्क बनेम, नरेशमणि काङमाङ, सुरज अधिकारी, पदम माबो, थर्कदीप तिगेला, भू० पू० गोरखा मेजर किशोर गुरुङ तथा ब्रिट्रिस फोर्सेस ब्रोड्कास्टिङ सर्भिस गोर्खा रेडियो परिवार, प्रवासी नेपाली सिर्जनशील (साहित्य) परिवार र प्रवासी वेदनाका आवाज परिवार वेलायत रहेका छन ।

म देश बाहिर रहँदा सहयोगीको भूमिका निर्वाह गर्नुहुने सबै साथीहरूमा र फुर्सदको समय मिलाएर यो पुस्तकको ९० प्रतिशत सामग्री टाइप गरिदिने, मेरो साहित्य यात्रामा सधैं सल्लाह दिने, सहयोग गर्ने मेरी प्रणयी भोजकुमारी लिम्बूप्रति आजीवन आभारी छु ।

अन्तमा, यो पुस्तक भित्रका हरेक कमीकमजोरीहरूलाई औंल्याइदिनुभई सल्लाह सुझाव दिनु हुन म हार्दिक अनुरोध गर्दछु ।

**विश्वास दीप तिगेला**

फक्स्टोन, बेलायत

२७ सेप्टेम्बर २००७

शीर्षक
१

# सधैँ मन घोच्ने केही गुनासाहरू



यसपटक धेरै व्यवहारिक हिसाबकिताबपछि तिहार मनाउन घर जाने निर्यणमा पुगेँ । सधैँ सबैलाई समस्याको रूपमा खड्कने



पैसाको अनुहारलाई बिर्सिदिऊँ । मैले मेरो घर परिवारसँगसँगै बसेर रमाइलो चाड तिहार नमनाएको झण्डै एक दशकै बितेछ । सञ्जोगले भनौँ सानो मौका मिल्यो र विविध समस्याका बाबजुद पनि घरतर्फ हान्निएँ । सधैँ गर्मी हुने देश, मुस्लिमहरूको देश ब्रुनाइबाट सिधै काठमाडौँ उत्रन झण्डै ५ घण्टा लाग्यो । काठमाडौँ ओर्लिनै लागेका थियौँ, त्यहाँको मौषम लोभलाग्दो थियो, जस्ले मनमा खुसीयालीको तरङ्ग ल्याएको थियो भने अर्कोतिर काठमाडौँ भन्सारमा के-कति दुःख दिने भो भनेर पीरले सताउन थालिसकेको थियो ।

भन्नु र स्वयम् आफैले गर्नुमा आकाश पातालको फरक हुन्छ । बेला मौकामा भित्र बाहिर गर्दा अन्य देशका एयरपोर्टमा भएका सुविधा र व्यवहारको अनुभवले होला मलाई मेरै देशको एयरपोर्टको बारेमा धेरै पीर लाग्छ र मसँग धेरै गुनासाहरू आउँछन् । म इमिग्रेसननजिक पुगिसकेको हुन्छु । यसपटक धेरै जहाज आएका थिए क्यारे मलेसिया, कतार र ब्रुनाइ एकैसाथ, त्यहाँ धेरै मान्छेहरूको हलचल थियो । सधैँ इमिग्रेसनको पासपोर्ट चेक गर्ने ठाउँमा झण्डै उमेर गइसकेका बूढो कर्मचारीहरू आफूखुसी लुगा लगाएर बसेका हुन्थे । उनीहरूको लुगा गोठाला जाँदाको भन्दा खासै फरक हुँदैन्थ्यो तर यसपटक ढाका टोपी लगाएको कर्मचारीको डेस्कअगाडि पुग्छु । पासपोर्ट हेर्न माग्यो, झिकेर दिएँ । उसले राम्ररी नियालेर हेर्‍यो र सोध्यो कहिले फर्कने ? मैले भने- एक हप्ता पछाडि । धेरैपटक आउँदाजाँदा धेरै पर्खनुपर्ने दुःखले गर्दा किन यस्तो यहाँ हुन्छ भनेर धेरै जिज्ञासा हुनु स्वाभाविकै थियो । मलाई लाग्यो सर्वप्रथम इमिग्रेसनका कर्मचारीहरूलाई अन्य मुलुकमा कसरी छिटोछरितो राम्रो र सन्तुलित काम गरिन्छ ? त्यस प्रकारको ज्ञान छैन उनीहरूलाई । दोस्रो काठमाडौँको इमिग्रेसनमा प्रायः बूढा कर्मचारी देखिन्छन् । त्यसमा थप काठमाडौँ अन्तर्राष्ट्रिय एयरपोर्ट भवन अत्यन्तै लाजलाग्दो छ ।

विचरा बूढो भइसकेका कर्मचारी, त्यसमाथि पासपोर्ट चेक गर्ने ठाउँमा पर्याप्त उज्यालो बत्ती नहुँदा आँखा तन्काइतन्काइ पासपोर्ट हेरेको क्षण अझ आलै छ र मैले यसपटक मेरो अगाडिको भलाद्मी कर्मचारीलाई सोधेँ तपाईंहरूलाई उज्यालो पुग्दो छ ? उसले हातले देखाउँदै भन्यो- यी यो सानो लाइट भर्खरै जोडेको छ, त्यसैले अहिले खासै समस्या छैन । ती साना लाइटहरू भित्रपट्टि राखिएका रहेछन् ।

बाहिर केही ठाउँको यात्रापछि काठमाडौं त्रिभुवन विमानस्थलमा आइपुग्दा साँच्चै नै घरबाट गोठ पुगेझैँ लाग्छ । विमानस्थल वरिपरिको रुग्ण घरहरूले झनै बस्तीविहीन ठाउँझैँ लाग्छ । राजधानी काठमाडौं सहर संसारको सबैभन्दा अनियन्त्रित, अस्तव्यस्त र पुरानो सहरझैँ लाग्छ, जस्तो कि त्यो बेलाको सहर जुनबेला पर्याप्त स्रोत साधन र यातायातको विकास भएको थिएन । विमानस्थलबाहिर निस्कँदा ट्याक्सी ड्राइभर, होटेल एजेन्ट र भारी बोकिदिने निहुँमा पैसा माग्नेहरूको भीड र व्यवहार देख्दा हामी नेपाली सभ्य भइसकेका छैनौँ कि जस्तो भान हुन्छ । अझ भनौँ एउटा सभ्य समाजका मानिसहरूसँग अनुहार देखाउन पनि लाज लाग्छ । आज यो लेख तयार गर्नुभन्दा केही क्षणअघि थाइल्यान्डको ब्याङ्कक एयर पोर्टमा केही दिनअघि जापान गएर फर्कंदै गरेका काठमाडौं धापासी निवासी सुदर्शन जो पर्यटकसँग सम्बन्धितका अनुसार काठमाडौंमा विदेशीलाई सपिङ गर्न लग्यो भने ६ सयको सामान २ सयतिर दिन्छ । हामी नेपालीलाई ८० डलर भनेका लज विदेशीलाई १० डलरमा दिन्छन् यो ठीक मैले बुझेभन्दा फरक छ । एयरपोर्टमा पर्यटक लिन आउने दलालहरू एक जना विदेशी होटलमा ल्याएबापत पनि कमिसन लिन्छन् । वास्तविक पर्यटन भित्र्याउन त इमान्दारिता देखाउनुपर्ने हो तर यस्ता ठग प्रवृत्तिले आगामी दिन पर्यटकहरू कति ढुक्कसाथ नेपाल आउलान् सोच्नै पर्ने बेला भएको छ । विमानस्थलबाहिर निस्कनासाथ पर्यटकहरू भारी बोक्ने र ट्याक्सी दलालहरूबाट अति पिरोलिन्छन् । नेपाल टेक्ने बित्तिकै कस्तो अनुभव गर्लान् ती पर्यटकहरूले ? तुरुन्त अध्ययन गर्नुपर्ने बडो अनौठो विषय बनेको छ यो कुरा । केही समयअघि म थाइल्यान्डको राजधानी ब्याङ्ककमा साथीसँग घुम्दै थिएँ, त्यहाँ पनि किनबेचमा थोरबहुत दलाल हुन्छ । मेरो साथीले सातसय पर्ने



सामान केही घटाएर किन्न माग्यो तर दोकानेले दिएन । नजिकै हामीले पर्खाइमा राखेको ट्याक्सी ड्राइभरले त्यो हाम्रो दलाली सुन्यो र विदेशीले मेरो देशमा आएर यस्तो दलाली गर्ने भनेर होला उसलाई साह्रै चित्त दुखेछ, हामीलाई अर्को ठाउँ लैजान अस्वीकार गर्दै नजिकैको ठाउँमा निस्कन आग्रह गऱ्यो । हामी पाहुनाहरूलाई सत्कार गर्न सिकी नै रहेका छौँ तर आफ्नो देशमा आएर पराई मान्छेले अनावश्यक, चाहिँदोभन्दा बढी दलाल गर्न खोजेमा हाम्रो पनि चित्त दुख्नुपर्ने होइन र ? सधैँ लाचारी र दलाली मात्र बन्नु नहुने हो । मुख्य कुरा अन्य देशका विमानस्थल कसरी चलेका छन् र कसरी चलाउनुपर्छ भन्ने कुराको पर्याप्त जानकारी लिने प्रयास नभएझैँ देखिन्छ । देशका ठूलाबडा विदेश जाँदा, आउँदा हामी साधारण नागरिकभन्दा फाल्टै सुविधा उनीहरूलाई उपलब्ध हुनुले पनि हामी सर्वसाधारणको इमिग्रेसन सिस्टम ज्यादै पुरानो तौरतरिकामा चलिरहेको हो कि भन्ने अनुमान गर्न सकिन्छ । अब अन्य देशको बारेमा चर्चा गरौँ । बेलायतका नागरिक विश्वको जुनसुकै ठाउँमा पुगेर विमानस्थल आइपुग्दा उनीहरू ब्रिटिस भन्ने थाह हुने बित्तिकै सजिलै प्रवेश गराइन्छ । लन्डनको हेथ्रो एयरपोर्टमा ५ वटा जहाजका यात्रुहरू कागजपत्र चेक सकेर बाहिर निस्कने समयभन्दा बढी नेपालको त्रिभुवन विमानस्थलको इमिग्रेसनमा एउटा जहाजको यात्रुहरूलाई छिर्न समय लाग्छ । यो कस्तो बिडम्बना ? यो समस्याको बारे कसले कुरा उठाउने ? भन्सार कर्मचारीले एक शब्द भन्ने बित्तिकै घुसको लागि पैसा मागेझैँ लाग्छ यो कस्तो नियति हो ?

अन्य मुलुकका विमानस्थल र जहाजहरूमा शतप्रतिशत भर्खरका युवा-युवती हुन्छन् । उनीहरूसँग जोस जाँगर हुन्छ । आफ्नै छोरी, नातिनी, सानी बहिनीले साथ दिएझैँ लाग्छ । यो विश्वकै चलनभन्दा फरक पर्दैन तर त्रिभुवन विमानस्थलमा चाहिँ गोठाला गर्दै भन्सार रुँगेजस्तो देखिन्छ । अपाङ्ग, उमेर नाघेका जसले कुनै नयाँ सौन्दर्य दिन सक्दैन, गाँठा परेका रोगी कर्मचारी देखिन्छन् । नत उनीहरूसँग बोल्ने कला छ, नत उनीहरूको निश्चित पोसाक छ । मैले अपाङ्ग, बूढापाकाको अपमान गर्न खोजेको होइन । अन्य देशको विमानस्थलसँग दाँज्न

मात्र खोजेको हुँ र साँच्चै भन्नुपर्दा वहाँहरूलाई अन्यत्रै सम्मानित ठाउँ दिनुपर्छ भन्ने आग्रह पनि हो ।

यसपटक काठमाडौंबाट थाइल्यान्डसम्म ९ वर्षपछि रोयल नेपाल एयरलाइन्समा (हाल नेपाल एयरलाइन्स) चढ्ने मौका मिल्यो । केही



महिनाअघि रोयल नेपाल एयरलाइन्सले अर्कोअर्कों जहाज किनेको भन्ने सुनेको थिएँ । सायद त्यही जहाजमा पो परेँ कि भनेर कौतुहल थियो । एयर होस्टेज दिज्यूहरू ३/४ जना हुनुहुन्थ्यो । अरू एयरलाइन्समा बहिनीहरू हुन्छन् । मैले ठूलै मौका रुँडेर एउटी दिदीलाई सोधेँ यो भर्खरै किनेको जहाज हो ? "नयाँ जहाज किनेकै छैन" उनले भनिन् । साँच्चै नै जहाज पहाडतिर चल्ने यात्रुबाहन पुरानो बसभैँ थियो । जहाजको सुविधा पनि पहाडको बसभैँ लाग्यो फरक कन्डक्टरचाहिँ दिज्यूहरू हुनुहुन्थ्यो । कुन्नि किन हो नेपाल एयरलाइन्सले नयाँ जहाज किन्यो भन्ने समाचार सुन्दा म आफैले केही पाएँजस्तै असाध्य खुसी लागेको थियो । सायद त्यो खुसी देशको प्रगतिमा एक नागरिकमा आएको हर्ष तरङ्गित र सञ्चारित भएको हुनुपर्छ तर दिज्यूको उत्तरले म खङ्कै भएँ ।

बेजोडको सङ्गीतलाई बुझ्नुपर्छ, मादलको तालमा नाच्नुपर्छ । हामी देशविदेशको विकास र परिवर्तनको प्रभावबाट टाढा रहन सक्दैनौं । त्यसैले नेपालको एक मात्र त्रिभुवन अन्तर्राष्ट्रिय विमानस्थलको संरचना र आमूल परिवर्तनको लागि सोच्न ढिला गर्नु हुन्न । यदि तुरुन्त संरचना नै बदल्न नसके पनि पाहुना आएको दिन सापटी मागेरै भए पनि जाउलो ख्वाउने चलन अरू देशहरूमा पनि लोकप्रिय छँदैछ त्यस्तो चलनलाई मात्र हामीले व्यवहारमा ल्याउनसके विदेशीले छिछि ! भन्ने मौका कम पाउने छन् । दसैंतिहार आएको बेला बाटो खनिएन, घरमा चुन, कमेरो छ्यापिएन, पोतिएन भने चाडपर्वको माहौलमा कति बेरमाइलो लाग्छ, हो त्यस्तै विकट तर अति सुन्दर हाम्रो देशमा घुम्न आउने पर्यटकहरूलाई लागि रहेको हुन सक्छ । यदि यतिविघ्न ठूलो परिवर्तन गर्न सक्दैनौं भने अन्य देशहरूमा भैँ एकभन्दा बढी अन्तर्राष्ट्रिय विमानस्थल बनाउने सोचमा लागे परिवर्तित समय सापेक्ष थोरै भए पनि सान्दर्भिक बन्दछ ।

*१६ नोभेम्बर २००४*
*ब्याङ्कक, थाइल्यान्ड*
*(साभारः गरिमा, भाद्र २०६३)*

## शीर्षक २

# कोसभो यात्रा: जिउँदी आमाको चिहान तयारी



कोसभोमा दिनहरू बिताएको झण्डै ४ महिना भएको छ । काम व्यस्तता र सैनिक कानुनले म बसेको ठाउँबाट खुलमखुल्ला कतै



जान मिल्दैन । डेढदशकअघि कलेजमा सँगै उठबस गरेको साथी गणेश अर्थात् एकताका मेरो गाउँमा पनि शिक्षण गर्नुभएका कारण म वहाँलाई गणेश सर भन्ने गर्छु । वहाँको अस्थायी वासस्थानमा जाने जमर्को गरेको पनि चारै महिना भएको छ । गणेश सर पनि नेपाल प्रहरीको हैसियतमा संयुक्त राष्ट्र सङ्घमार्फत १ वर्षको कार्यावधि लिएर कोसभोमा कार्यरत हुनुहुन्छ । वहाँ आफ्नो श्रीमतीसहित कोठा लिई कोसभोका स्थानीयवासी सरह बसोवास गरिरहनु भएको छ ।

बिहान भेला भइरहेको बखत सिनियर दाइले लौ आज तिमीहरूमध्ये कोही कम्पनी मेसिङको लागि खसी, सुँगुर खोज्न जानुपर्छ भन्नुभयो । मैले हत्तपत्त स्वेच्छा प्रकट गरेँ । किसानको छोरो भएकोले खसी, सुँगुरको बारेमा राम्रो ज्ञान छ । यद्यपि गाउँ, सहर गएर खोज्ने र किन्ने कामचाहिँ मेरो लागि पहिलो र रोचक काम हो । केही समयअघिदेखि मित्र गणेशजीको क्वाटर जाने निहुँ कसरी बनाउने भन्ने सन्दर्भमा प्रसङ्गवस वहाँ बसेकै घरमा केही सुँगुर, कुखुरा पालेको जानकारी दिनुभएको थियो । कुनै पनि निहुँमा जसरी भए पनि म बसेको घरमा आउनु भन्ने गणेश सरको निम्तो थियो ।

"हेलो, गणेश सर ! अबको केही घण्टापछि म तपाईंको ठाउँ आउदैछु" भनी फोन गरेँ । "लौ, राम्रो भयो मेरो पनि छुट्टि छ । हामी घरमै हुन्छौँ, आउनुहोस्" गणेश सरको प्रतिजवाफ थियो । मैले दिएको समय बित्यो, म त्यहाँ पुग्न सकिनँ र वहाँले फोन गर्दै सोध्न थाल्नुभयो । "खोइ, नआउने हो भन्या ?" "आउने हो, तर योजना अलि गाजेमाजे भयो । अब दिउँसो अलि अबेर मात्र आउने भएँ ।"

कोसभो आएपछि पहिलोपटक राजधानी प्रिस्तिनामा खेलकुदको केही सरसामान किन्न गयौँ र त्यतात्यतैबाट गणेश सर बस्ने ठाउँमा झण्डै दिउसोको ३ बजे पुग्यौँ । उग्लारी सहरको नजिक स-साना र सुन्दर घर भएको बस्ती रहेछ । घरको अगाडि बगैँचा र फूलबारी रहेछ । गणेशजी हामीलाई लिन बगैँचाअगाडि निस्कनुभयो । हामी वहाँको क्वाटरअगाडि पुग्यौँ । त्यहाँ हेर्दै रमाइलो लाग्ने

स्याउको बोट, छेउमा टेबल र केही कुर्सीहरू सजाइएका थिए । कोसभोको समर मौसमको कारण पातलो भेस्ट र हाफ्प्यान्ट लगाएका गणेश सरले बस्न आग्रह गर्नुभयो। बगैँचामा अङ्गुर, स्याउ, आलुचा, बेलायती नासपातीलगायतका फलफूल लटरम्म फलेका थिए । सुन्दर फूलहरू लाम लागेर बाटोको दायाँबायाँ आँगनको छेउछेउ हुँदै सिकुवासम्म रमाइलो गरी फूलेका थिए । मेरो साथमा पेस्तोल थियो र केही साथीहरूको साथमा बेलायती राइफल थियो। हामी बसेको बगैँचा नजिकै व्यवस्थित काँडेतारको बार थियो । त्यो बारको पल्लोपट्टि हेर्दा झण्डै ६५ वर्षीया बूढिबोजू सरसफाइ, थन्कोमुन्को गर्दै थिइन् । हामीलाई बेलाबेला हेर्दै पनि थिइन्, सायद हतियारधारी हामीलाई देखेर हुनुपर्छ ।

गणेशजीको पृष्ठभूमि अत्यन्तै गौरव गर्न लायक विद्यार्थी राजनीति पनि हो । राजनीतिको मात लागिरहेको बेला हामी छुट्टिएको कारण हुनुपर्छ हामीबीच जति मित्रताको, छिमेकीको नाता छ त्योभन्दा बढी विचार र आस्थाको सामिप्यता छ। हामी छुट्टिएको लगभग १३ वर्षपछि संयोगले गृहयुद्धले ग्रस्त मुलुक कोसभोमा भेट भएका छौँ । वहाँ नेपाल सशस्त्र प्रहरीको उपरीक्षकको रूपमा र म गोर्खाली सेनाको हैसियतमा ।

मसँगै त्यहाँ पुगेका हामी चारजना र गणेशजीबीच दुःखसुखका गफगाफ सुरु हुन्छ। मेरो आँखाचाहिँ लटरम्म फलेका फलफूलहरूमा घुमिरहेको हुन्छ। गणेशजीको गफ धेरैभन्दा धेरै मेरा अन्य साथीहरूसँग होस् भन्ने चाहन्छु। उनीहरूको गफमा म बेलाबेला सही थाप्न मात्र भ्याइरहेको हुन्छु । ठाउँ अत्यन्तै शान्त, शीतल भएकोले दिनभर यही बसेर पढिरहूँ लाग्यो। काठमाडौँबाट केही महिनाअघि किनेर ल्याएको चर्चित अनुदित पुस्तक **मेक्सिम गोर्की**को **आमा** उपन्यास पढेर सिध्याउनै लागेको थिएँ । त्यो पुस्तक यही रमाइलो ठाउँमा बसेर पढिसिध्याउँझैँ लाग्यो । त्यसपछि अर्को चर्चित **पल्पसा क्याफे** पनि कोसभो बसाइको अवधिमै सिध्याउने योजनामा थिएँ। गणेशजीको राजनैतिक गफ सुरु भइसकेको थियो। त्यसैले मेरो मन वहाँहरूको छलफलमा आकर्षित भयो । नजिकै हुनु भएकी बूढीबोजू पनि हाम्रो नजिकै आउनुभयो र गणेशजीसँग केही सर्बियन भाषामा गफ गर्नुभयो । हामी गणेशजीको साथी भन्ने थाह पाउने बित्तिकै बोजूले **"राखिया राखिया"** भन्दै हातको इसाराले **"ल्याऊ"** भन्नुभयो । के भन्नुभएको हो बोजूले म अलि अलमलमा परेँ तर मेरा साथीहरू पहिले नै बोस्नियामा काम गरेका थिए र



उनीहरूलाई **"राखिया"** भनेको स्थानीय रक्सी र उनीहरूको त्यो सत्कार गर्ने चलन थाह रहेछ । धन्यवाद हामी काममा आएका राखियाले मात दिन्छ । त्यसैले पिउँदैनौँ जस्ता कुरा सर्बियन भाषामा जानीनजानी बोलेर बोजूलाई थमथमाएँ । बूढीबोजूले हामीलाई पाहुना मानेर त्यसरी सत्कार गरेको देखेर म मनमनै आभारी भएँ तर बोजूलाई त्यो भन्न सकिनँ । मैले सर्बियन भाषा बोल्न सकेको भए वा बोजूले नेपाली वा अङ्ग्रेजी बोल्न सक्नुभएको भए मात्र त्यो सम्भव हुने थियो ।

वृद्धाहरूको अनुहारमा म एक प्रकार भगवान्को रूप देख्छु । वहाँहरूको नजिक मात्र पुग्नपाउँदा पनि मलाई ज्यादै आनन्द लाग्छ । वहाँहरूको प्रत्येक बोलीमा एउटा बेग्लै उपदेशका रस हुन्छ। वृद्धाहरूको मायामा साँच्चै नै स्वर्गझैँ आनन्द र सन्तुष्टि पाइन्छ। सम्भवतः यो मेरो अनुभूति घरमा वृद्धा बुबाआमालाई छोडेर टाढा विदेश आउनुको पीडा हुनुपर्छ । प्रत्येक दिन म स्वयम् वृद्धातर्फ लम्कदै गर्नुको पूर्वाभास भएको हुनुपर्छ । मेरा छोराछोरीलाई मैले माया गरेझैँ, वृद्धा बोजूले मलाई माया गरिरहनु भएको छजस्तै लागेर हुनुपर्छ। ती बोजू देख्दैमा खुसी र आनन्दको महसुस गरिरहेको हुन्छु । घरभित्रबाट तुला भाउज्यूले नमस्तेको अभिवादन गर्दै चिया ल्याउनुभयो ।

बूढीबोजू घरको वरिपरि खात्रकखुत्रुक काम गर्दै हामीसामु आउनुभयो र फेरि उही राखियाको अनुरोध गर्नुभयो। कति बिघ्न ढिपी गरेकी होलिन् ? एकमनले "ल बोजू ल्याउनुहोस्" भन्न मन लागेको थियो । किनकि आजसम्म मैले राखिया चाखेकै छैन । साथीहरूले फेरि पनि पर्दैन भनेपछि बोजूले चित्त बुझाइन् । मनमनै सोचेँ, "माया गरेर बुबाआमाले बनाई दिएको खाना छोराछोरीले नखाइदिदा बुबाआमाको मन चिढिएजस्तै भयो होला ।" टेबलको वरिपरि सर्बियन र अल्बेनियालीहरूको चालचलन, संस्कार र संस्कृतिको बारे चर्चा चलिरहेको थियो । गणेशजीले आफ्नो अनुभूति र अनुभवहरू सुनाउँदै जानुभयो- म यो घरमा बसेको झण्डै ८ महिना भयो । यिनीहरूको चालचलन हामी नेपालका जनजातिहरूको जस्तै भएकोले एकै परिवारझैँ भएर बसेका छौँ । हातले देखाउँदै यो सानो एरिया सर्बियन बस्ती हो। युद्धका बेला धेरै सर्बियन मारिए र कतिपयचाहिँ सर्बिया गए। हाल थोरै सर्बियनहरू मात्र कोसभोमा बाँकी रहेका छन् । धनीमानी, टाठाबाठा सबै सर्बिया गइसकेका छन्। गरिब र निर्धा मात्र यहाँ बसेका छन्। (नजिकै हुनुभएकी

बूढी बोजूलाई देखाउँदै) यी बोजूको १ भाइ छोरो छ । ऊ पहिला राम्रो होटलमा काम गरेको र उसले २ वटीसम्म विवाह गरेको थियो रे तर युद्धपछि बेरोजगारी रहनु र यहाँका महिलाहरूमा बढेका स्वार्थी संस्कारको कारण दुवैसँग पारपाचुके भएको रहेछ । अहिले ऊसँग कुनै श्रीमती पनि छैन । उसको दिमागमा केही असर परेजस्तो केही काम गर्न जाँगर लगाउँदैन । ऊ सिर्फ सुत्छ, खान्छ, हिँड्डुल गर्छ, केही काम गर्दैन घर यिनै बुढीबोजूले धानिरहेकी छिन् । यी बोजूको एक बहिनी छोरी छिन् र उनको लोग्नेचाहिँ अल्बेनियाली-हरूसँगको युद्धमा एम्बसुमा परी मरेको रहेछ । उनको एक छोरा र दुई छोरी छन् । तिनीहरू यहीँ बस्छन् तर बोजूलाई खासै काम सघाउँदैनन् । नाति केटोचाहिँ मुर्ख पनि छ । मैले ती बोजूलाई झनै राम्ररी नियालेँ । मलाई ती बोजूको धेरै माया लाग्यो तर भाषा समस्याले केही भन्न सकिनँ टुलुटुलु हेरिरहेँ मात्र ।



यी बोजूका छोराछोरी, नाति, नातिना सबै सर्बिया बसाइँ जान कस्सिएका छन् । यी बोजूचाहिँ सर्बियामा गएर पनि केही पाइँदैन, बाँच्न गाह्रो हुन्छ भनी सर्बिया जान मानेकी छैनन् । बोजूको मृत्युपश्चात् उनका छोराछोरी तुरुन्त सर्बिया जाने तयारी पक्कापक्कीजस्तै भएको छ । यो घरनजिकै एउटा चिहानघारी छ । बोजूको लोग्नेलाई त्यहीँ गाडेको रहेछ र त्यही बाजेको चिहानसँगै घरव्यवहार थामिरहेकी बूढीबोजूको लागि पनि चिहान तयारी गरिसकेकी छिन् । मृत्यु भइसकेको बाजेको चिहानमा राखेको बाजेको फोटोसँगै बोजूको फोटो पनि राखिसकेकी छिन् । जब बोजू मर्छिन् तब त्यहाँ लगेर राख्ने अनि त्यो जोडी



फोटोमा बोजूको भागमा खाली छोडेको ठाउँमा मृत्युको मिति राख्ने । "यी ! यहाँ मिति खाली छ !!" भन्दै उनको छोराले मलाई देखायो भन्दै गणेशजीले अचम्म मान्दै ती घटनाहरू सुनाउँदै गए । बुबाको चिहाननजिकै अर्को चिहान राख्न सकिने ठाउँ छ । त्यसैले बुबाआमा एकै ठाउँ होस् भनेर ती जिउँदी आमाको चिहान तयारी गरेको कुरा छोराले बतायो । म छक्क परेँ, नेपालमा त त्यसो गऱ्यो भने शीर ढलेर चाडै बित्छन् क्यार तर यहाँ ज्यादै अनौठो लाग्यो । त्यो कुरा सुनेर हामी सबैजना छक्क पऱ्यौँ । "उनीहरूको कुनै एक छिमेकीले पनि यस्तै गरेका थिए रे" गणेशजीले थप्नुभयो । आफ्नो चिहानको तयारीबाट यी बोजू भने खुसी छैनन् । बोजू हामीनजिकै हुनुहुन्थ्यो तर हाम्रो नेपाली भाषाको कुरा वहाँले बुझ्नु हुन्नथ्यो । नजिकैको अर्को कुर्सी तानेर बोजूलाई बस्न आग्रह गरेँ । हाम्रो गाउँघरमा छिमेकीको घरमा पाहुना आएको बेला छिमेकीहरू गफ गर्न जाने चलनजस्तै गणेशजीका हामी पाहुनासँग गफ गर्न ती बोजू आउनुभएको झैँ लाग्यो ।

यी बोजूले त्यहाँबाट ७ किलोमिटर टाढाको राजधानी सहर देखेकी छैनन् रे । उनका छोराछोरी नातिनातिनाले समेत देखेका छैनन् । यो कुरा सुनेर हामी फेरि छक्क पऱ्यौँ । त्यसको कारण प्रिस्टिनामा प्रायः सबै अल्बेनियालीहरू छन् । त्यहाँ घुम्न गएको खण्डमा उनीहरूलाई कुनै पनि बेला अल्बेनियालीहरूले मार्न सक्दछन् । उनीहरू सर्बियालीहरूको बाहुल्य रहेको ग्राचानिचा सहर जान्छन् । यिनीहरू कुनै पनि बेला केही भइहाल्न सक्छ भनी सधैँ डराउँछन् । कोसभोमा प्रायः सबै घरहरूमा बन्दुक हुन्छ र यिनीहरूसँग पनि बन्दुक छ । यी दुईचार घर अत्यन्तै दबाब र उत्पीडनमा गाउँमा बसेका छन् । गणेशजीले यी कुराहरू बताउँदाबताउँदै केही दिनअघि एकजना छोरी मान्छेसँगको वार्तालापको याद आयो । कोसभोका अल्बेनियाली र सर्बियाली बस्तीका छरछिमेकबीच युद्ध चलेको बेला छिमेकीले तिमी डराउनु पर्दैन, कसैले केही गर्दैन यही बसौँ भनी अनुरोध गर्थे र अर्को हूल आएर लथालिग्ड़ै मारेर जान्थे । बाफरे ! कस्तो नियति !!

कस्तो संवेदनहीनता !!! कुनैबेला मेरो देश नेपालमा पनि यस्तै पो होला कि भनेर अत्यासलाग्दो पीर मलाई हुन्छ ।

केही दिनअघि कोसभोको छिमेकी मुलुक मेसोडोनियाको राजधानी स्कोपेको डाँडामा अर्थोडक्स् किस्चियनहरूको विशाल अग्लो बनावट भएको क्रस चिन्ह घुम्न डेढघण्टाको सिधै उकालो बाटो चढ्दै गर्दा एकजना व्यक्तिसँगको भेटमा उसले भनेको थियो- तेल र पानी कहिल्यै पनि मेल हुन सक्दैन । उसको अर्थ थियो मेसोडोनियन अर्थोडक्स् र मेसोडोनियाकै मुस्लिम अल्बेनियालीहरूबीच भिन्नता छ, मिल्न सक्दैनन् भनी दावी गरेको थियो ।

कोसभो स्वतन्त्र र सार्वभौम राज्योन्मुख छ तर आजसम्मचाहिँ सर्बियाको विशेष एउटा प्रान्तीय राज्य (प्रोभिन्स) हो । सर्बिया, मन्टेनिग्रो, बोस्निया, क्रोसिया, स्लोभानिया र मेसोडोनिया डेढ दशकअघिसम्म एउटै शक्तिशाली युगोस्लाभिया भनेर चिनिन्थ्यो । मार्सल टिटोको कम्युनिस्ट शासनको बेला अत्यधिक विकास भएको तत्कालीन युगोस्लाभ धेरै शक्तिशाली थियो । सबै जाति सम्प्रदायको आ-आफ्नो साहित्य संस्कृतिको विकास स्वतन्त्र रूपबाट भइरहेको थियो । जातीय राष्ट्रका रूपमा विकास भएको मुलुकको राजधानी बेलग्रेडले एकात्मक योजनाहरू पूरै युगोसलाभमा लाद्न थाल्यो अनि आ-आफ्नो समूहमा बसेकाहरू एकाएक छुट्टिन पुगे । नदीमाथिको पुलको तार चुडिएझैँ सिङ्गो युगोस्लाभ टुक्राटुक्रामा टुक्रिन पुग्यो । फलतः विभिन्न ६ राष्ट्रमा छुट्टिए र अब कोसभो सातौँ राष्ट्र बन्ने चाहनामा डुबेको छ । यो कोसभोको इतिहास, यो पूर्व युगोस्लाभको इतिहास हाम्रोजस्तो बहुधर्म, जाति, सम्प्रदाय बसोबास गर्ने नेपालको लागि पनि राम्रो उदाहरण बन्न सक्दछ । देशको व्यवस्थापिका, कार्यपालिका र न्यायपालिकाको सानो गल्तीले कतिसम्म असर हुँदोरहेछ भन्ने पाठ हामी नेपालीले पनि सिक्नु आवश्यक देखिन्छ ।

कोसभोको सहरमध्ये मित्रोभिचा एक हो । यो सहरको बीच भागमा सितनिचा नामको एउटा नदी बग्दछ । त्यो नदीको एकापट्टि अल्बेनियालीहरूको बसोबास छ र अर्कोपट्टि सर्बियनहरूको बस्ती छ । नदीको नजिकै सर्बियन बस्तीमा ठू-ठूला र धेरै पूराना चर्चहरू छन् र नदीको अर्कोपट्टि अल्बेनियाली बस्तीमा मस्जिदहरू छन् । सानो नदी भएकोले नानीहरू खेल्दाखेल्दै वारिपारि पुग्न सक्छन् । पल्लोपट्टिको कुनै कार वल्लोपट्टि आएको खण्डमा उनीहरू कडा निगरानी राख्छन् । सर्बियन र अल्बेनियालीहरूको कारको नम्बर बेग्लाबेग्लै हुने भएकोले स्पष्ट चिन्दछन् ।



प्रिस्तिनामा चल्ने बस सेवा पनि अल्बेनियालीहरूको बेग्लै र सर्बियनहरूको बेग्लै हुने गर्दछ । एकै ठाउँमा काम गर्ने यी दुबै जाति आ-आफ्नो बसमा चढ्ने गर्दछन् । अर्को रोचक प्रसङ्ग के छ भने यिनीहरूको टेलिफोन नेटवर्क पनि आ-आफ्नै छ । टेलिफोनको नम्बरबाटै को कुन जाति हो भनेर चिन्न सकिन्छ । सर्बियन पैसा दिनार अल्बेनियलीहरू प्रयोग गर्दैनन् । यदि उनीहरूलाई दिनार दिएमा उनीहरूउपर उपहास गरेको सम्झन्छन् । उनीहरूले युरो पैसालाई प्रयोगमा ल्याएका छन् । अझ रोचक कुरा के छ भने कोसभोको छिमेकी मुलुक अल्बेनिया र अल्बेनियाली जातिको बाहुल्य रहेको यस कोसभोले एउटै झन्डा प्रयोग गर्दछन् । उनीहरू देशको झन्डाभन्दा धार्मिक समानताको आधारको रूपमा यो झन्डालाई स्वीकार्छन ।

कोसभोमा नाटो र संयुक्त राष्ट्र सङ्घ प्रवेश गरेको झण्डै एक दशक भइसकेको छ । यद्यपि एक जातिले अर्को जातिलाई विश्वास गर्न सक्दैनन् । यहाँका मानिस शारीरिक रूपमा सुन्दर देखिन्छन् । भौतिक पूर्वाधार राम्रै देखिन्छ । पहिला युगोस्लाभिया रहेको समयमा उत्खनन गरेअनुसार मित्रोभिचा र ग्राचानिचा सहरनजिक सुनखानी रहेको छ । उक्त ठाउँहरूबाट सुन झिक्ने तम्तयारी गृहयुद्धपछि बन्द भएको कुरा स्थानीयबासीहरू बताउछन् । बिडम्बना यहाँका मानिसहरूका दैनिक जीवन भने ज्यादै कष्टकर छ । ढुक्कसाथ आनन्दले सुत्ने बस्ने चैन कसैलाई छैन ।

मदर टेरेसाजस्तो व्यक्तित्व जन्मिएको र हुर्किएको यस ठाउँका मानिसहरू ठूला जीउडाल भएका गोराहरू नै हुन् । उनीहरू आफ्नै अल्बेनियाली, सर्बियन भाषा बोल्दछन् । अग्ला जीउडाल हुने भएकाले यहाँका मानिस विशेषत छोरी मान्छे मुस्लिम धर्मसम्मत घरधन्दाले पनि हुन सक्छ, उनीहरूको ज्यान पातलो र सुन्दर देखिन्छ । अन्य देशहरूका जस्तै मोटा मान्छेहरू यहाँ कमै देखिन्छन् । सम्भवत संसारका मान्छेहरूमध्ये सबैभन्दा सुन्दर मान्छे यही बाल्कन मुलुकमा बसोवास गर्ने जातिहरू हुन् । डाँडाकाँडा भएको सुन्दर भू-बनावट भएको ठाउँका मानिसहरू पनि सुन्दर हुनुले आफ्नै महत्व राख्दछ । यस ठाउँमा फलफूलको राम्रो उत्पादन हुने भए पनि धान खेतीचाहिँ भेटिँदैन ।

संयुक्त राष्ट्र सङ्घको सभामा कोसभो छुटै राज्य हुनसक्छ भनी मतदान भए पनि रसियाको भिटो प्रयोगको धम्कीले सर्बियाको विशेष राज्यको रूपमा मात्र रहने सम्भावना बढेको छ । हालसम्म सर्बियाको सानो एक राज्यको रूपमा रहेको यस

कोसभोको कुल क्षेत्रफल १० हजार ८ सय ८७ वर्ग किलोमिटर रहेको छ भने यस राज्यमा अल्बेनियाली ८८ प्रतिशत, सर्बियन ७ प्रतिशत, टर्किस १ प्रतिशत, बोस्नियन १.७ प्रतिशत, गोर्नी ०.५ प्रतिशत र रोमा १.७ प्रतिशत रहेका छन् । यहाँ अन्तर्राष्ट्रहरूको सामूहिक संस्था KFOR को संरक्षणमा अन्तरिम सरकार रहेको छ। विश्वका विभिन्न ४४ मुलुक संलग्न कोसभोमा युरो पैसा मुख्य प्रचलनमा रहेको छ ।



कोसभोको सीमा सम्बन्ध अबलेनिया, मेसोडोनिया, मन्टेनिग्रो र सर्बियासँग रहेको छ । कोसभोको राजधानी प्रिस्तिनानजिक स्लातिना भन्ने ठाउँमा एकमात्र विमानस्थल छ । यो विमानस्थल पहिला युगोस्लाभियाका मिलिटरी-हरूको विमानस्थल थियो र सर्बियन भाषामा भएका नामहरू पछिल्लो समयमा परिवर्तन गरी अल्बेनियाली भाषामा राख्ने होड चलेकै बेला यस विमानस्थललाई पनि प्रिस्तिना अन्तर्राष्ट्रिय विमानस्थल (Pristina International Airport) नामाकरण गरिएको थियो ।

यस राज्यको मुख्य आयात निर्यातको व्यापार सर्बियासँगै हुने गर्दछ । कोसभोको मुख्य आयस्रोत साधारण व्यापारबाहेक अरू खासै केही देखिँदैन तर अफगानिस्तान, पाकिस्तानतिर उत्पादन हुने अफिम, चरेसजस्ता लागूपदार्थलगायत वेश्यावृत्तिको ओसारपसार युरोपतिर यही कोसभोबाट हुन्छ भनी आरोप लाग्ने गरेको छ । यहाँका केही



मानिसहरूसँग अकूत सम्पत्ति हुनुले पनि त्यस आरोपलाई थप पुष्टि गर्छ । कोसभोभित्रै सुनखानी रहेको चर्चा भए पनि निकाल्ने काम भने अझसम्म भएको छैन । त्यही सुनखानीको आयस्रोत देखिएको कारण सर्बियाले छुट्टै स्वतन्त्र राज्य बन्न नदिएको स्थानीयबासीहरू आरोप लगाउँछन् । अन्तर्राष्ट्रिय चासो र संलग्नता पनि त्यसैको कारणले बढेको हो कि भनी शङ्का गर्न सकिन्छ । हाल कोसभोमा ४४ राष्ट्रका सेना र प्रहरी संलग्न रहेका छन् । एकजना हङ्गेरियन पुलिस अफिसरका अनुसार कोसभोमा विदेशी शक्तिहरूबीच आपसमा आफ्नो देशको शान देखाउँदै दादागिरी देखाउने र ठू-ठूला माफिया ग्रुपबाहेक केही छैन । बेलाबेला नाराजुलुसको समयबाहेक अरूबेला खासै केही समस्या देखिँदैन । आफ्नो देशमा अन्य देशका शक्तिशाली सेनाहरू विभिन्न बाहानामा आएर आफूहरूलाई नीच व्यवहार गरेको सम्झेर यहाँका मानिसहरू बेखुसी देखिन्छन् । उनीहरू भन्छन्- हाम्रो ठाउँ हो तर हाम्रो केही पनि लाग्दैन । संयुक्त राष्ट्रसङ्घले खटाएको अनमिनसँग यहाँको सरकारको बागडोर रहेको बेला कोसभोका जनताहरू वाक्कदिक्क भई आक्रोसित बनेका छन् । संयुक्त राष्ट्रसङ्घीय दूत फिनल्यान्डका पूर्व राष्ट्रपति मार्टी आस्तिसारीको नेतृत्वमा रहेको अन्तर्राष्ट्रिय शक्तिहरू निरन्तर सक्रिय रहेका छन् ।

भौगोलिक रूपमा अत्यन्तै सानो कोसभोमा जम्मा ७ वटा जिल्लाहरू रहेका छन् । तीमध्ये प्रिस्तिना, प्रिज्रन, पेया, फेरिजाई, जाकुभा, मित्रोभिचा र जिलान रहेका छन् । यहाँका मुख्य सहरहरू पनि तिनै जिल्लाका सदरमुकामहरूलगायत अर्को पोदुयभा हो ।

प्राप्त तथ्याङ्कअनुसार यस कोसभोमा महिला ५३ प्रतिशत र पुरुष ४७ प्रतिशत रहेका छन् । यहाँका युवा जमातमा बेरोजगारीको निक्कै ठूलो समस्या देखिन्छ । नरमपन्थी मुस्लिम धर्म मान्ने यहाँका अल्बेनियालीहरू पूर्व अमेरिकी राष्ट्रपति बिल किल्टनलाई सम्मानको दृष्टिले हेर्छन् । उनको नाममा प्रिस्तिना सहरमा बिल किल्टन स्ट्रिट र मेसोडोनियालाई जोड्ने लामो मोटरबाटोको नाम पनि बिल

किल्टन हाइवे राखेका छन् । मुस्लिमहरूविरुद्ध परम्परागत लड्दै आएका अमेरिका र ब्रिट्रिसले कोसभोका मुस्लिमहरूलाई सहयोग गर्नुलाई निक्कै अर्थपूर्ण मानिएको छ ।

कुनै बेला टर्कीबाट आएका अटोमन एम्पायरको प्रभाव रहेको यस कोसभोका अल्बेनियालीहरू मुस्लिम हुनुमा त्यसैको प्रभाव रहेको इतिहास पाइन्छ। धर्मसम्मत ज्यामितिक दरमा बढेका अल्बेनियाली जनसङ्ख्याको कारण यहाँका आदिवासी सर्बियनहरू अस्तित्वविहीन भइसकेका छन् । विशेषतः दोस्रो विश्वयुद्धदेखि मार ब्यहोर्दै आएका सर्बियनहरूको अब कोसभोमा कस्तो हैसियत रहला अहिल्यै नै भन्न सकिन्न। सधैं स्थानीय रक्सी राखिया खाएर रमाउने सर्बियनहरूको अवस्था निक्कै चिन्ताजनक देखिन्छ ।

एकजना साथीले केही वर्षअघिको स्मरण गर्दै भन्यो- बोस्नियाको साम्प्रदायिक लडाइँमा यतिविध्न मान्छे मारिएछ कि एउटा गाउँका सबै छोरा मान्छेहरू मारिएछन् । हामी त्यहाँ पुग्दा धेरै मान्छेहरू भेला भए । भेला भएकामध्ये एकजना बूढो बाजेबाहेक सबै छोरीमान्छे र त्यसमा पनि प्रायः युवतीहरू थिए। उनीहरूले हामीलाई रमिता गरे र बाजेचाहिँले त्यस गाउँका सबै केटाहरू कसरी मारिए त्यो कथा सुनाए । हामी प्राणीहरूको प्रकृति नै यस्तो छ, जहाँ पुरुष छ त्यहाँ महिला हुनुपर्छ, जहाँ महिला छ त्यहाँ पुरुष हुनुपर्छ तर त्यस भीडमा पुरुषहरू थिएनन् । यतिसम्म कि स-साना छोरा-नानीहरूलाई समेत मारिएको थियो रे । त्यहाँ पुग्दा अलि अनौठो लाग्यो र गाउँ बेरसिलो नसुहाएको जस्तो लाग्यो । अझै त्यो गाउँमा पुगेको भर्खरै हो जस्तो लाग्छ ।

युद्धहरूमा मुख्य गरी छोरा मान्छेहरू बढी मर्ने गर्दछन् । त्यो बोस्नियाको रोग सर्दै कोसभो हुँदै मेसोडोनियासम्म पुगेको साम्प्रदायिक भड्काव अझै पनि तन्दुरुस्त भइसकेको छैन । पहिलेकै सद्भाव फर्कन अझै केही दशक लाग्न सक्छ। हिजोका छिमेकी साथीभाइ, हितैषीको सुमधुर सम्बन्ध पुनः जोडिन अझ बर्षौं लाग्नेछ । कोसभोमा धनी र गरिबबीच पनि ठूलो दुरी छ तर जातीय चरित्रको समस्याले ती वर्गीय समस्या गौण बनेका छन् । आज हामी जति वर्गीय समस्याको सम्बन्धमा चिन्तन गर्छौं त्योभन्दा बढी जातीय समस्याको बारेमा सोच्नुपर्ने भएको छ ।

गफगाफ गर्दै हामी बगैंचामा बसेको झण्डै ३ घण्टा बितिसकेको थियो । हामी मेसिडको लागि खसी, सुँगुर, कुखुरा खोज्न त्यहाँ पुगेका थियौं । गणेशजीलाई अब



चाँडो गर्नुपर्ने कुरा राख्यौँ । त्यसपछि त्यस घरकी बूढी बोजूसँग वहाँको सुँगुर पालनतर्फ लाग्यौं । त्यो सुँगुर पालनमा ४ वटा ठू-ठूला सुँगुरहरू मात्र बाँकी रहेछ । गणेशजी पेशाले सशस्त्र प्रहरी उपरीक्षक तर वहाँ साहित्यकार पनि हो । वहाँ नेपाली साहित्यमा राम्रो कलम चलाउनुहुन्छ । अझ त्योभन्दा बढी त वहाँ मगर भाषाको राम्रो गीतकार हो । वहाँले राम्ररी मगर भाषा बोलेको त मलाई थाह थियो तर वहाँले बोजूसँग सरर सर्बियन भाषा बोलेको सुन्दा म दङ्ग परेँ। सुँगुरलाई जिउँदै जोख्ने र प्रति केजी २ युरोको दरले लिने कुरा बोजूले भन्नुभयो । हेर्दै माया लाग्दी बोजूको दाममा हामी खुसी साथ सहमत भयौँ र हाम्रो बासस्थानतर्फ फर्कियौँ ।

विचरी बूढी बोजूले नै घर धान्नुपर्ने त्यो घरको अवस्था आज कस्तो होला ? आफू जिउँदो हुँदाहुँदै छोराले चिहान तयार गरिसकेकोमा कति चित्त दुख्दो हो बोजूको ? अब बोजूलाई कति बाँच्ने रहर होला ? भोलि बोजूविहीन त्यो घर, फूलबारी र बगैँचा कस्तो बन्न जाला ? तर त्यसो होइन बोजूले सधैंसधैं बाँच्नुपर्छ। आफूले जन्माएको छोराले चिहानको हतारो गरे पनि अरू धेरैधेरै छोराहरू बोजू सधैं बाँचेको हेर्न चाहन्छन् । सायद ती बोजूले हामीलाई फेरि पनि पर्खिरहेकी होलिन् । हाम्रो लागि केही राखिया अवश्य राखेकी होलिन् ।

*१७ जुलाई २००७*
*सिलिम लाइन, प्रिस्तिना, कोसभो*

शीर्षक
३

# केन्या यात्रा एउटा सुन्दर क्षणको अन्त्य




आज आकाश सफा छ । कतैकतै बादलको ससाना समूहबाहेक दिन एकदमै रमाइलो छ। सायद यो क्षण विदाइको क्षण अर्थात् केन्या भ्रमणको अन्तिम दिन भएकोले हो कि मेरो मन बेचैन छ । मनमा धेरैधेरै कुराहरू खेलिरहेका छन् । मलाई लाग्छ, यो यात्रा मेरो जीवनको अनुपम यात्रा-मध्येको एक हो। यो एउटा राम्रो यात्रालाई सधैंसधैं सम्फन सकूँ। म सोच्न- थाल्छु केही दिनअघि र आजसम्मको मेरा यात्राहरू अनि मैले टिपेका नौला कुराहरू ।



अफ्रिकाको नाम सुन्नेवित्तिकै काला मान्छेहरूको देश, गरिब देशहरूको महादेश, उब्जाउ नहुने मरुभूमि नै मरुभूमिको देश, एड्स सबैभन्दा बढी फैलिएको ठाउँ भनेर सम्फने गर्थें। एकदिन तालिमको लागि अफ्रिकी मुलुक केन्या जाने कुरा चल्यो। गाउँठाउँ, देशविदेश घुम्न औधी मन पराउने मान्छे म खुसीले गद्गद् भएँ। यद्यपि मैले केन्या जान पाउने नपाउने टुङ्गो थिएन। म जुनसुकै कामको लागि भए पनि जाने इच्छा जाहेर गर्दै रहें।




गत सेप्टेम्बरको पहिलो हप्ता भाग्यवश वेलायतबाट केन्यातर्फ बाटो लागें। मनमा गरिब मुलुक केन्याको बारेमा विभिन्न कुरा सोच्दै लामोबाटो काटिरहेको हुन्छु । लन्डनबाट मध्यरातमा उडेको जहाजलाई केन्या पुग्न झण्डै ८ घण्टा लाग्छ। उडेको केहीबेरमा मिर्मिरे उज्यालो हुन्छ। क्षितिजमा गोलो आकारको रातो सूर्यको उदय हुन्छ। म जहाजबाहिर हेर्न आतुर हुन्छु । सम्भवत हामी इजिप्टको आकाशमाथि हुन्छौं। मसँगै हुनुभएका धन दाइले इजिप्टको पिरामिड केही वर्षअघि यही जहाजको बाटोबाट देखेको कुरा बताउनुभयो । म त्यो पिरामिड हेर्न लालयित हुन्छु र निक्कै लामो समयसम्म जहाजभित्रबाट बाहिर हेरिरहन्छु। जहाजबाट मरुभूमि ठाउँहरू मात्र अत्यासलाग्दो देखिन्छ तर त्यो पिरामिडको पत्तै हुँदैन । मैले सोचेको मरुभूमिको देश केन्याको राजधानी नाइरोबी पुग्यौं। नाइरोबी मरुभूमि नभएर हाम्रो नेपालको माघ फागुनझैं सुक्खा मात्र थियो। सधैं यस्तै सुक्खा ठाउँ हो त ? मनमनै सोचें र एयरपोर्टबाट बाहिर निस्किएर खुल्ला

चौरीलाई राम्ररी नियालेँ। त्यहाँ सुकेका झारहरू थिए र निर्क्योल गरेँ- सधैँ यो ठाउँ सुक्खाचाहिँ होइन। राजधानी नाइरोबीदेखि ४ घण्टाको लामो बाटो भई केन्याको उत्तरी भागमा पर्ने रिफ्टभ्याली प्रान्तको एक सहर नान्युकी पुग्नुपर्ने थियो। विदेश भ्रमण गर्दा त्यो देश मेरो देशभन्दा धनी गरिब के छ भनी स्वाभाविक रूपले चासो हुँदोरहेछ। मेरो देश नेपालभन्दा गरिब देश सम्झिएको केन्याको अन्तर्राष्ट्रिय एयरपोर्ट देख्नेबित्तिकै म झस्किएँ। एयरपोर्ट अति व्यवस्थित थियो। हामी बसमा चढेर बाटो लाग्यौँ। बाटोमा थुप्रै झुप्रा घरहरू, काठका विरक्तलाग्दा स-साना घरहरू थिए। प्लास्टिकको थोत्रा बोराले बनेका दुःखी गरिबका घरहरू देखेँ। बाटाहरूमा धुलैधूलो थिए। त्यसैले फेरि सम्झिएँ गरिब भनेको त यही रहेछ। धनीहरूको भव्य अग्ला घरहरू पनि देखिन्थे र मलाई लाग्यो केन्यामा धनी र गरिबबीच ठूलो अन्तर छ। गरिब अति गरिब र धनी धेरै धनी। धनी र गरिबबीचको असमानता हुँदा समाज साँच्चै नै असुहाउँदिलो भएझैँ लाग्यो। नाइरोबी सहर अत्यन्तै सुक्खा देखिन्थ्यो र पानीको समस्या छ भन्ने सजिलै अनुमान गर्न सकिन्थ्यो। निक्कै टाढा पुगेपछि एउटा सानो खोला भेटियो। त्यहाँको पानीको बहाव सानो र धमिलो थियो। ठाउँहरू उराठलाग्दा थिए। हाम्रो बस निरन्तर अघि बढिरहेको हुन्छ। समतल भू-भाग भएको देश केन्यामा केही पहाड र शिखर पनि देखिए। केन्या देशको सबैभन्दा उच्च शिखर माउन्ट केन्या ५ हजार १ सय ९९ मिटर उच्च रहेको छ। त्यस शिखरनजिकको सहर नान्युकीमा झिसमिस साँझमा पुग्यौँ। हाम्रो आफ्नो कामको बाँडफाँड भयो। भाग्यवश यसपटक मैले तालिममा सहभागी ६ सय ५० जनाको विभिन्न क्रियाकलापको फोटो खिच्ने साथै एड्भान्चरियर्स तालिमको लागि व्यवस्था गर्नुपर्ने र स्थानीय जनताहरूसँग राम्रो सम्बन्ध कायम गर्नुपर्ने जिम्मेवारी आयो। विशेषतः एड्भान्चरियर्स तालिमको व्यवस्थापन पक्ष चुनौतीपूर्ण थियो। किनकि, नेपालभन्दा झन्डै ४ गुणा ठूलो देश केन्याको एक कुनाबाट अर्को ठाउँमा पुग्नुपर्ने थियो। हामी त्यस कामको लागि योजनारत रहयौँ र अन्ततः ५ दिनपछि नान्युकीबाट पुनः नाइरोबीको बाटुकमा आइपुग्यौँ। हामी ९ जना थियौँ। हामीलाई २ वटा यातायातको साधन प्राडो प्राप्त भयो र ठाउँठाउँमा पुगेर व्यवस्थापन गर्ने कामको लागि हाम्रो यात्रा सुरु हुन्छ।

पहिलो दिन हामी सागना पुग्यौँ। त्यहाँ एड्भान्चरियर्स तालिमअन्तर्गत कायकिङ, सफारी, राफ्टिङ र रक क्लाम्बिङबारे व्यवस्था गऱ्यौँ। त्यस्तैगरी दोस्रो दिन नाइभासा तालतर्फ लाग्यौँ। नाइरोबीबाट नाइभासाको बाटो लाग्दा निक्कैबेर



नाइरोबीमा बाटो हरायौँ। त्यहाँ रोडको चिन्हहरू अस्पष्ट थिए र धेरै ठाउँमा चिन्ह नै थिएनन्। बल्लतल्ल बाटो पत्ता लाग्यो र त्यसतर्फ हानियौँ। बाटोका छेउछाउ ठाउँहरू साँच्चै नै रमाइलो थियो। मेरै गाउँ धनकुटा, धरानजस्तो ठाउँहरूमा पुग्दा म दङ्ग परेँ। नाइभासा पुगेर होटलमा सामान राखेलगतै हामी तुरुन्तै त्यहाँको राष्ट्रिय निकुञ्ज घुम्न बाटो लाग्यौँ। केन्यामा विभिन्न १० वटा ठू-ठूला राष्ट्रिय निकुञ्जहरू छन्। प्रत्येक निकुञ्जमा प्रवेश शुल्क एउटै निर्धारण गरिएको रहेछ। विदेशी पर्यटकको लागि प्रतिव्यक्ति अमेरिकी डलर ४० र केन्या रेजिडेन्टको लागि ५ सय सिलिङ र केन्यन नागरिकको लागि २ सय केन्या सिलिङ तिर्नुपर्ने रहेछ। हाम्रो साथमा एकजना गाइड आयो र हामी निकुञ्जभित्र पस्यौँ।

केही दिनअघि मात्र एकजोडी बेलायती नवदम्पती हनिमुन मनाउन केन्या आएका र तिनीहरू जङ्गलमा जनावर हेर्न सफारी गरिरहेको बेला अचानक हात्तीले केटाचाहिँलाई मारेको समाचारले हामी सबै स्तब्ध भयौँ। हामीमा डर पनि थपियो। हामीले गाडीभित्रैबाट जनावरहरू हेर्ने निधो गऱ्यौँ। निकुञ्जभित्र प्रवेश गरेलगतै त्यहाँ जिराफ, जेब्रा, डिगडिग, बाँदर, हात्ती, मृग, अर्ना देख्यौँ। मेरो लागि जिराफ र जेब्रा नौलो र रोचक थियो। जहाँ पानी हुन्छ, प्रायः जनावरहरू त्यहाँ भेलाहुने गर्दारहेछन्। जहाँ जेब्रा र जिराफ हुन्छ, त्यहाँ चराचुरुङ्गी पनि आउने र धेरै जनावर, पशुपक्षी भेला हुँदा रहेछन्। त्यो मलाई सबैभन्दा मन पऱ्यो। जेब्रा र जिराफ धेरै मिलनसार खालका हुँदारहेछन्। त्यसरी जम्मा भएको भेलाले जनावर, पशुपक्षीबीच पनि सहिष्णुता, सद्भाव हुँदोरहेछ भन्ने बुझ्न सकिन्छ। उनीहरू पनि आपसमा शान्ति र सद्भाव चाहदा रहेछन् भन्ने अनुमान गर्न सकिन्छ। त्यहाँ सिंह र अर्नाले चाहिँ शान्त जङ्गलका शान्तिप्रिय जनावरहरूमा हिंसात्मक गतिविधि गर्दा रहेछन्। त्यो निकुञ्जभित्र ठूलो मात्रामा प्राकृतिक ग्यास पनि निस्कँदो रहेछ। धुवाँको ठूलो मुस्लो र त्यस प्राकृतिक ग्यास प्रवाह गर्ने ठू-ठूला पाइपहरू पनि प्रसस्तै देख्न सकिन्थ्यो।

नाइभासा पुगेको दोस्रो दिन हामी लङ्नट पहाड हेर्न बाटो लाग्यौँ। कचौराजस्तो एकदमै गोलो प्रकारको डिल र बीचको गहिरो भागमा टम्मै जङ्गल भएको त्यो पहाड हेर्न असाध्य रमाइलो लाग्यो। धेरै वर्षअघि ज्वालामुखीबाट बनेको यो पहाडको सौन्दर्य सम्भवत संसारमा अन्यत्र कतै छैनजस्तो लाग्यो। कचौराको बिटबिट कमिलाले चक्कर लगाएझैँ पूरै चक्कर लगाउँदा झण्डै ३ घण्टा समय

लाग्यो। यो लङ्गनट पहाडबाट नाइभासा ताल पोखराको फेवातालभन्दा ठूलो र पर्यटकीय सहर नाइभासा चिटिक्क देखिन्छ ।

तेस्रो दिन हामी नाइभासाबाट नाइरोबी हुँदै केन्याको पर्यटकीय सहर अर्थात् पानी जहाजहरूको बन्दरगाह सहर मोम्बासातर्फ लाग्यौं । केन्याका झण्डै उत्तरदेखि सुदूरदक्षिणमा पुग्न धेरै लामो



यात्रा गर्नुपऱ्यो । मोम्बासा जाँदा बाटैमा पर्ने अति लोकप्रिय साभो राष्ट्रिय निकुञ्जको पूर्वी क्षेत्रमा हामी प्रवेश गऱ्यौं । हाम्रो गाडीलाई जिराफहरूले केही क्षण बाटो रोके । अलि अघि बढ्यौं, अनि अर्ना (भैंसी) को बथानले बाटो रोक्यो । बिहान हिँडेका हामी त्यतिबेला दिउँसोको १ बजेको थियो । हामी भोकले लखतरान भइसकेका थियौं । निकुञ्जभित्र एउटा भव्य होटल थियो र त्यहाँ साधारण खानाको प्रतिव्यक्ति अमेरिकी २० डलर तिर्नुमा बेग्लै अनुभूति भयो । होटलको कोठेबारीजस्तै नजिकको ठाउँमा २ वटा सानोसानो पोखरी बनाइदिएका रहेछन् । त्यहाँ जेब्रा, घोडा, हात्ती पानी पिउन पालैपालो आउँदा रहेछन् । त्यो प्रकृया हाम्रो लागि अति रोचक र महत्वपूर्ण रहयो । मलाई लाग्यो, त्यो होटल २४ सै घण्टा जङ्गली



जनावरबाट असुरक्षित छ। त्यहाँबाट पुग्नुपर्ने ठाउँ अझै टाढा थियो र हामी बाटो लाग्यौं । पुनः बाटोमा मृगजस्तै जनावर एम्पालाका ठू-ठूला बथान हिँडिरहेका थिए । त्यसैले गाडीलाई तीव्र गतिमा लैजान सक्दैनथ्यौं । निकुञ्जको नियमअनुसार प्रतिघण्टा ४० कि० मि० को गतिमा मात्र हाँक्न सकिने सूचनाहरू भए पनि जनावरको



बाटोमा हुने उपस्थितिले हामीलाई चाहिँदो गतिमा गाडी हाँक्न हम्मेहम्मे पऱ्यो । झण्डै ३ घण्टाको यात्रापछि हामी निकुञ्जबाट बल्लतल्ल बाहिर निस्कियौं । साँझ परिसकेको थियो, बाटो कच्ची थियो, ढिलै भए पनि हामी पक्की बाटोमा निस्कियौं । त्यो साभो निकुञ्जको पूर्वपट्टिको भागमात्र घुम्न त्यत्रो विघ्न समय लागेको आधारमा निकुञ्जको क्षेत्रफल अनुमान गर्न सक्छौं । बिहान ६ बजेदेखि बेलुकी ८ बजेसम्म निरन्तर गाडी चलाउँदा लथ्रक्क थाकिसकेका थियौं । अँध्यारो भइसकेको थियो । निष्पट अँध्यारो बाटोमा गाडीको अत्याधिक गतिदेखि म डराइरहेको थिएँ । मनमनै सोचें- ड्राइभिङ र स्वास्थ्यको सम्बन्धमा अनभिज्ञ भएको नै राम्रो लाग्यो । किनकि ड्राइभिङको ज्ञान हुनेलाई अर्काले गाडी हाँक्दा

उसको गल्ती थाहा हुने भएकोले डर लाग्ने गर्दछ । त्यस्तै स्वास्थ्य उपचारको बारेमा ज्ञान छ र आफैलाई उपचार गर्नुपर्ने भयो भने कतै डाक्टरले हेलचेक्राइँ पो गरिदिने हो कि भनेर डर लाग्ने गर्दछ । यो मेरो नितान्त व्यक्तिगत अनुभव हो । त्यसबेला गाडी तेज गतिमा हाँक्दा केही होला कि भन्ने डरले पानीपानी भइसकेको थिएँ । विस्तारै हाकूँ भने पुग्नुपर्ने ठाउँ अझैँ धेरै टाढा थियो । झ्याप्पै अँध्यारो र अलि भीरको बाटो त्यसमा पनि घुम्तीहरू । हाम्रा दुईवटा गाडीमध्ये म अघिल्लोमा थिएँ । विपरीत दिशाबाट आउने प्रायः जसो गाडीले आउने जाने ठीक क्रस समयमा हाइलाइट बाल्दथ्यो । त्यसले गर्दा केहीबेर बाटो केही देखिँदैनथ्यो । बाटो अति साँगुरो र खतरा थियो । एउटा गाडीसँग क्रस भयौँ । केहीबेरमा पछाडिको हाम्रो गाडी मैले देख्न छाडेँ । स्वाभाविक रूपमा अगाडिको गाडीलाई पछ्याउन निक्कै अप्ठ्यारो हुन्छ । सम्झँ, हामीसँग भर्खरै बाटो काटेको गाडीसँग ठोक्किएर दुर्घटनामा पर्‍यो होला । पछाडिको गाडीमा रहेको मेरो साथी कमललाई चुपचाप फोन गरेँ । सम्पर्क हुन सकेन । झन् म आफै अत्तालिएँ तर मसँगै पछाडि सिटमा बसिरहेका मेरा साथीहरू भने ढुक्कै थिए । म डराएको कुरा उनीहरूलाई पत्तै हुँदैन ।

सबै जवानै जवान हुँदा कहिलेकाहीँ राम्रो काममा, कहिले नराम्रो काममा र कहिले यस्तै खतरापूर्ण काममा साहस गर्ने गरिन्छ । पछाडिको गाडीलाई पर्खनुपर्छ भन्ने मलाई लाग्यो । पछाडिको गाडीलाई केही भयो भन्ने लाग्यो र मनमनै सोचेँ- जसरी भए पनि गाडी रोक्नै पर्छ । मैले पिसाब फेर्ने निहुँगरी गाडी रोक्न आग्रह गरेँ । गाडी रोकियो भगवान्‌को कृपाले पछाडिको गाडी पनि आइपुग्यो । म ढुक्क भएँ र हामी फेरि निरन्तर अघि बढ्यौँ । मोम्बासा सहरमा पुगेर केही बेर बाटो हरायौँ बल्लतल्ल बाटो पत्ता लाग्यो र केहीबेरमै कार, गाडीहरू बोकेर समुन्द्रवारि-पारि लैजाने ठाउँ (फेरी) मा पुग्यौँ । हामी पुग्ने होटल बुक थियो तर अबेर भइसकेको थियो । त्यहीमाथि झन् त्यो फेरीमा पर्खनुपर्‍यो । रातको झण्डै साढे ११ बजे हामी मोम्बासा डियानी बिच (किनारा) को जेदानी होटलमा पुग्यौँ । समुद्रले छोएको भागमध्येकै सबैभन्दा राम्रो ठाउँ डियानी बिच (किनार) को रात्री जीवन पनि निक्कै रमाइलो लाग्यो ।

अर्को दिन दिउँसोको अबेर हामी बाटमुतर्फ लाग्यौँ र टेम्पल प्वाइन्ट नामक इटालियन होटलमा बास बस्यौँ । भोलिपल्ट ड्राइभर गर्ने कामको पालो मेरो आयो र बाटमुबाट मेलान्डी पुगेर फर्कियौँ । बिहानै उठेर हामी नाइरोबी फर्कियौँ



मेलान्डीबाट राजधानी नाइरोबी आउने बाटाको झण्डै आधा भाग बाटो कच्ची थियो । त्यो विकट गाउँको छेउ हुँदै जाने कच्चा गाडीको बाटोमा गुड्ने गाडीको सङ्ख्या शून्य नै थियो । बाटोको दायाँबायाँ स्कुलहरू देखिन्थे । कति स्कुलहरू रुखको फेदमा थिए । मलाई मेरो देशको झल्झल्ती याद आयो । सम्झेँ गरिब हुनु पनि अभिशाप नै रहेछ । बाटोको दायाँबायाँ गोठालाहरू गाईबाखा चराइरहेको देख्दा मेरो बाल्यकालको सम्झना आयो र मलाई एकप्रकारको रमाइलो लाग्यो । विगत सम्झेर बेस्सरी आफै दुख्दै त्यही दुखाइमा मज्जा लिइरहेँ । भूगोलसँग जनसङ्ख्याको सन्तुलन हुनुपर्छ तर केन्यामा भूमिअनुसार पर्याप्त जनसङ्ख्या नभएको मैले देखेँ । निक्कै लामो बाटो काटेँ यद्यपि नेपालको जस्तो अत्यासलाग्दा जनसङ्ख्या केन्यामा देखिँदैन । धेरै भ्रष्टाचार हुने केन्याको गरिबीपनदेखि बेखुस मेरो मन जब राजधानीको मुख्य सहर पुग्यो तब दोधारमा पर्‍यो । राजधानी सहर नाइरोबीको मुख्य सहर साँच्चै व्यवस्थित र राम्रो । केन्या आएको २ हप्ताभित्र झण्डै केन्याको आधा भाग घुमिसकियो र सम्झेँ मेरो व्यक्तिगत मनोकाङ्क्षा पूरा भयो । म एक प्रकार खुसीले गद्‌गद् भएँ । मान्छेले चाहेका कुरा दैवले पनि जुराइदिँदो रहेछ । खुसी मनमा यिनै कुराहरू खेले । “इच्छा पूरा भयो अब जुनसुकै कामको जिम्मेवारी आए पनि खुसीसाथ गर्नेछु” मनमनै बाचा गरेँ । यात्राको दौडानमा मैले विभिन्न कुराहरू देखेँ, भेटेँ र नोट गरी राखेँ जुन यसप्रकार छः

यहाँका सेना पुलिसको सबैभन्दा तल्लो दर्जाकाले प्रतिमहिना १८ हजार सिलिङ तलव पाउँछन् । यो पैसा नेपाली रूपैया १८ हजार बराबर हो । सम्झेँ, नेपालमा एउटा सिपाहीलाई यति विघ्न तलब छैन र फेरि सम्झेँ ५ वटा देशसँग जोडिएकाले यहाँको सेनाले ती सीमारक्षा गर्नुपर्ने भएकोले सेनालाई प्राथमिकता भएको अनुमान । केन्याली नागरिकका अनुसार केन्या आर्मी र पुलिसमा भर्ना हुन ज्यादै गाह्रो छ । ठूलो सोर्सफोस चाहिँन्छ रे । केन्या आर्मीको जीवनस्तर हेर्दा निक्कै रमाइलो पनि देखिन्छ ।

केन्याको धेरै ठाउँमा रेलको लिक ब्यापक विछ्याइएको देखिन्छ तर त्यो लिकमा एउटै रेल नचलेको देख्दा मलाई लाग्यो रेल जति रोडमा चल्ने गाडी छ त्यति छरितो सजिलो हुँदैन । अर्को कारण केन्यामा पर्याप्त जनसङ्ख्या छैनन् । एड्सको महामारीको कारण निकट भविष्यमै आवश्यक जनसङ्ख्या नहुने विषयमा ब्यापक चिन्ता व्यक्त गरिएको छ । बिजुलीको रुग्ण खम्बाहरू थिए, तार थिएनन्, यदि थिए भने चुडिएका थिए । मलाई लाग्यो नेपालमा पनि विदेशी सहयोगले बनेका बिजुली लाइनहरू हामी आफैले मर्मत सम्भार गर्ने बानीको विकास गरेनौँ भने एकदिन

केन्याको जस्तै बूढो खम्बाहरू मात्र हुनेछन् । त्यस्तै केन्यामा पहाड र मधेस दुवै हावापानी पाइन्छ । वास्तवमा कृषि क्षेत्रमा अफ्रिकी मुलुकमध्ये सबैभन्दा सफल मुलुक केन्या हो । यहाँको काठ अत्यन्तै कडा र दाउरा बाल्दा अति सजिलै बल्ने र लामो समयसम्म जल्ने विषेशताको हुन्छ । यो देखेर मलाई साह्रै गजब लाग्यो । काठको मूर्ति,



सरसामान यहाँको मुख्य व्यापारमध्ये एक हो । औधी सुन्दर प्राकृतिक वनावट र जङ्गली जनावरहरूको विश्व राजधानीझैँ लाग्ने केन्याको पहिचान संसारमै विशिष्ट छ । **"हाकु नामा टाटा"** यसको अर्थ समस्या छैन हुन्छ । यो वाक्य अत्यन्तै लोकप्रिय छ । राष्ट्रिय गान, जन्मदिवस गीतमा पनि यो शब्दहरू प्रयोग हुन्छन् । मलाई यो वाक्यलाई अर्को वाक्यसँग दाँज्न मन लाग्यो त्यो हो **"हामीजस्तो कोही छैन"** यो भनाइ मेरो पल्टनको हो । यी दुवैलाई म दाँज्छु । अनि मलाई लाग्यो- चलनचल्तीका यस्ता भनाइहरू प्रेरणा दिने जोसिला र शक्ति दिने साहसिलो हुनुपर्दछ । **"समस्या छैन"** यस्ता खाले भनाइले उत्साह र प्रेरणा दिँदैन भन्ने मेरो निक्यौल छ । **"के खोज्छस् कानो आँखो भनेझैँ"** यसपटक अफ्रिकी मुलुक पहिलोपल्ट



घुम्न पाएको त्यसमा पनि एड्भान्चरिर्यस् तालिमको व्यवस्था गर्ने जिम्मेवारी पाएको र मेरो शौखको काम फोटोग्राफरको काम पाएकोमा आफैलाई भाग्यमानी सम्झेँ । तालिमकै क्रममा अझ सिभिल लुगा लगाएर पत्रकारको नक्कल गर्नुपर्‍यो । यसपटक तालिमको बेला केही वर्ष पुरानो मेरो नेपालको प्रेसपास चलाउँदा प्रेसपास चेक गर्नेहरू छक्क परे स्वयम् मलाई पनि रमाइलो लाग्यो ।



यसपटक तालिम गर्ने इलाकाका स्थानीयवासीहरूको मनसाय बुझ्ने र उनीहरूलाई सहयोग गर्ने पब्लिक रिलेसनसिपको जिम्मा लिनुभएका गोरखा मेजर हर्कराज साहेबलाई मैले सहयोग गर्नुपर्ने भयो । समाज सेवा गर्नुमा साह्रै रमाउने म फेरि अर्को काम अपनाइयो र के खोज्छस् कानोआँखाझैँ भयो । सुरुसुरुमा अफ्रिकन काला मान्छेहरूका अनुहार कालो र अँध्यारो मात्र देखिन्थ्यो । एकदिन दुईदिन हुँदै झण्डै डेड महिनाको अवधिमा त गोरा र गोर्खाका बीचमा पनि ती कालाजातिहरूलाई वास्तै हुन छाड्यो । पहिले कालाबाहेक केही नदेख्ने आँखाले राम्रा, नराम्रा अनुहार समेत छुट्टाउन सक्ने भयो । विशेष आर्चरपोस्ट इलाकामा रहँदा त्यहाँका स्थानीयवासीसँग भिज्न म साम्बुरू र मेरो जोडी हर्कराज

सा'बचाहिँ तुर्कना जाति हौं भनी रमाइलो गर्न थाल्यौं । यी विविध सैनिक क्रियाकलापमा सहभागी हुदै जाँदा आफ्नै नोकरी ११ वर्ष हुँदासम्म विश्वास नलागेको कुरा यसपटक भने स्वयम् मलाई विश्वास भयो कि सैनिक संरचना र प्रणाली ज्यादै व्यवस्थित र पारदर्शी पनि हुँदोरहेछ ।

जासुसीको झैँ जिम्मेवारी लिएर सेनाहरू स्थानीय गाउँगाउँमा सहयोग गर्न पुग्दा रहेछन् । झण्डै ४ दशकअघिदेखि बिट्रिस सेना केन्यामा तालिम गर्न जाने गर्दछन् । तालिम गर्ने इलाकामध्ये आर्चरपोस्ट एक हो । त्यहाँका स्थानीय मानिसहरू बेखुसी भएका कारण उनीहरूको मन जित्नको लागि त्यहाँका व्यक्ति र वातावरण बुझ्न त्यहाँका साम्बुरू युथ लिग डेभलपमेन्ट फोरमसँग छलफल गरी उनीहरूको लागि एउटा फोरम अफिस बनाइदिने सहमति भयो । त्यसअनुसार आर्चरपोस्ट बजारको एकछेउ वासोनिरो नदीको पुल नजिक १२ फिटअगाडि चौडा र २० फिटपछाडि लम्बाइ भएको जग्गालाई केन्या सिलिङ ६ हजार ८ सय त्यहीको गाउँ कार्यालयमा तिरेर किन्यौं । यस इलाकामा जग्गा अति सस्तो भएको कुराको जानकारी पनि भयो । फोरम अफिसको नक्सा पास गर्नको लागि फोटोकपी गर्न झण्डै २ घण्टाको बाटो भई छिमेकी जिल्ला इजियलोको सदरमुकाम पुगेर फर्किंदै थियौं । पानी बेस्सरी परिरहेको थियो, मसँगै यात्रा गर्नुहुने मेजर हर्क सा'बले ल्यान्ड रोभर हाँक्नुभयो । हिलो, खाल्डो भएको अप्ठ्यारो बाटोमा गाडी एक्कासी चिप्लियो । भाग्यबश बल्लतल्ल गाडी सही बाटोमा आयो । त्यो यात्रा जतिबेला सम्झन पुग्छु अझैं पनि म तर्सने गर्छु ।

त्यस आर्चरपोस्ट इलाकाका मानिसहरूको मुख्य पेशा पशुपक्षी पालन हो । उनीहरू घुम्ती गोठाला गर्छन् । हामीले फोरमको लागि किनिदिएको जग्गामा हाम्रो तालिमको लागि जर्मनबाट आएका बिट्रिस सैनिक इन्जिनियरका एक डफ्फाले लगातार काम गर्न थाले । स्थानीय कामदार पनि लगायौं र जग ढलान गरेर आधा काम पूरा गरिछाड्यौं । त्यतिन्जेलसम्ममा नगद ६ लाख सिलिङ र श्रम गरी १४ लाखभन्दा बढीको काम भयो । त्यस्तैगरी हाम्रो एजुकेसन सेन्टरमा फाल्टो रहेका अङ्ग्रेजी, गणित पाठ्यपुस्तकहरू केन्याको गरिब स्कुलको लागि भनी ५ काटुन लगिदिएका थियौं । ती पुस्तकहरू गिरिगिरी प्रायमरी स्कुल आर्चरपोस्टलाई प्रदान गऱ्यौं । स्कुल सञ्चालक समितिका अध्यक्ष डेभिड लाकमेड र प्रधानाध्यापिका श्रीमती लेपरपोरिटले प्रसन्नता व्यक्त गरिन् साथै विद्यालयलाई व्यवस्थित चर्पीको



आवश्यकता भएकोले सहयोगलाई आग्रह गरे तर हामीसँग समय र बजेट सकिसकेकाले अरू हाम्रा टिमलाई भनिदिन्छौं भनी आश्वासन दिँदै विदा भयौं ।

गत १० नोभेम्बरको कुरा हो, हामीले प्रयोग गरेका सरसामान तथा तालिम गरेको जङ्गललाई स्थानीय केन्यालीलाई फर्काउन केन्या र इथोपिया जोड्ने विशाल गाडीबाटो हुँदै हामी जाँदै थियौं । बाटोको अवस्था ठू-ठूला खाल्डो, ढुङ्गा मानौं नेपालको पहाडको एकदमै बिग्रिएको कच्ची रोडभन्दा नराम्रो अवस्थाको थियो । मैले हाँकिरहेको ल्यान्ड रोभर गाडी एक्कासी दाहिनेपट्टिको रुखमा ठोक्कियो । स्थानीय कामदार ५ जना र क्याप्टेन शिव सा'ब मेरो गाडीमा थिए । हामी कसैलाई केही भएन तर एकजना कामदारको टाउकोबाट अलिकति रगत बगेको देख्नेवित्तिकै म उसलाई समाउन जाँदै थिए तर शिव सा'बले ए ए खुल्ला हातले नछुनु भन्नुभयो । यो मान्छेलाई एच्० आई० भी० भएको मलाई शङ्का छ । उसको रगत खाली हातले छुनुहुँदैन भन्नुभयो, म झसङ्ग भएँ । यदि त्यसबेला मैले खाली हातले छोइहालेको भए सायद मेरो जीवन यतिवेला फिल्मको कथाजस्तै हुनेथियो होला । गाडीको स्टेरिङ देब्रेपट्टि भएको कारण पनि त्यो सानो दुर्घटना भएको थियो । किनकि म सधैं दाहिने स्टेरिङ भएको गाडी चलाउने गर्दछु । गाडी झण्डै २५ वर्ष पुरानो भएको र त्यो गाडीको ४ वटा गल्ती भएको कारण त्यो घट्ना घटेको कुरा गाडी चेक गर्ने इन्जिनियरले बतायो । त्यसले गर्दा चालकले कुनै गल्ती नभएको सावित भयो । सम्झन्छु, किनेर पनि नपाइने अनुभव र शिक्षा त्यसबेला, त्यो घटनाबाट लिएँ ।

स्थानीयबासीसँगको सम्बन्ध सुमधुर बनाउने सन्दर्भमा सडक बालबालिका बस्ने ठाउँ लाइकेपिया रिहाइबिटेसन् सेन्टरमा पुग्यौं । त्यहाँ मुख्य गरी ४ वटा स-साना घरहरू थिए । खाना पकाउने घर, २ वटा सुत्ने घर एउटा सबैभन्दा सानोचाहिँ पढ्ने स्कुल थियो । पढाइ चलिरहेको थियो म अनुमति लिएर कक्षाभित्र पसेँ, त्यहाँ मिसमास विद्यार्थीहरू थिए । विशेष गरेर कक्षाको भित्ताहरूमा प्लास्टिकको बोरालाई पोस्टरजस्तो बनाएर त्यहाँ हातले बुनेर साना नानीहरूलाई सिकाउने ए, बी, सी, डी अक्षरहरू लेखिएको थियो । हेर्दा राम्रो बलियो र सस्तो त्यो मेहनतको पोस्टर देखेर मलाई आनन्द लाग्यो । त्यहाँ धेरै केटाकेटीहरूमध्ये एउटी बहिनी १४ वर्षकी थिइन् । सहायक व्यवस्थापिका सुसनका अनुसार ती बहिनीलाई एड्स लागिसकेको छ । उनलाई अझ नियालेँ उनी त झन हट्टाकट्टा देखिन्थी । त्यस्तै गरी २ वर्षको सिम्बा पनि एड्स सङ्क्रमित छ । सुसनका अनुसार एड्स सङ्क्रमित व्यक्तिको

कपाल झर्ने भएकोले नचिनियोस् भनी केन्याका मानिसहरूले कपाल खौरने गरेको र जस्ले औषधी सेवन गर्दैछ ती व्यक्ति हृष्टपुष्ट देखिन्छ भनी बताइन् ।



त्यो असहाय सेवा केन्द्रमा हाम्रो समूहले मर्मत सुधारअर्न्तगत खानेपानीको थप व्यवस्था, केटाकेटी खेल्ने ठाउँको निर्माण, सुत्नेघरमा रङ्गरोगन र नयाँ चर्पीको निर्माण गऱ्यो । नगद ४ लाख र श्रम ६ लाख गरी झण्डै १० लाख सिलिङको प्रोजेक्ट सम्पन्न गऱ्यौं । तालिमका लागि केन्या आएका टिमले सम्भवत पहिलो पटक यसरी स्थानीयलाई सहयोग गरेको हुनुपर्छ । त्यति मात्र होइन केही दिनअघि गत ६ नोभेम्बरका दिन नदीमा अल्झिएको लासलाई समेत झिक्न हामीले सहयोग गरेका थियौं । त्यसकारण हामीप्रति स्थानीयबासीहरू आभारी बनेका छन् ।

१२ नोभेम्बर अर्थात् एउटा खुसीयालीको दिन बिहानै उठेर नुहाइधुवाइ गरेर चक्लेट र रासनको पोको बोकेर त्यही सडकका खाते बालवालिका बस्ने ठाउँ असहाय वालवालिका सेवा केन्द्र अर्थात्



लाइकेपिया अर्फनेज, नान्युकीमा गएँ र सबैलाई चक्लेट बाडेँ । मेरो लागि विशेष उत्सवको दिन, मनभरि बेग्लै प्रसन्नता थियो । त्यसदिन हाम्रो प्रोजेक्ट त्यहाँका स्थानीय मेयर गाउँ प्रमुखलाई सुम्पने कार्यक्रमअनुसार दिनको १२ बजे सम्पन्न भयो । त्यो क्षणको



खुसीलाई अझ सार्थक बनाउन मैले आर्चरपोस्ट इलाकामा बसोबास गर्ने आदिवासी साम्बुरु जातिको बारेमा खोजमुलक लेख लेखेँ । त्यसरी नै मैले मेरो जन्मदिनको खुसीयाली मनाए । यसपटक जन्मदिनको अवसरमा टुहुरा, असहाय, बेवारिसे बाल-बालिकालाई झण्डै ८ के० जी० जस्तो चकलेट बाँडेर मनाउने अवसर मिल्यो र आउँदो वर्षहरूमा पनि यसरी नै मौका मिल्न सकोस् भनी कामना गरैं । किनकि दुःखी दरिद्रहरूउपर सानै मात्र किन नहोस् सेवा गर्न सकेमा साँच्चै नै एकप्रकारको खुसी लाग्ने गर्दछ मलाई । जन्मदिनको खुसीयाली मनाउने शैली पनि मेरो आफ्नै प्रकारको होस् जस्तो लाग्छ ।

मेरो मनमा गुथिएका केही थप २, ४ कुराहरू आर्चरपोस्ट इलाकामा उँटको बथान, भेडाबाखासरह देखेर धेरै रोचक लाग्यो । केन्याको कृषि प्रणाली कतिपय हाम्रो नेपालको कृषि प्रणलीसँग मिल्दोजुल्दो छ । केन्यामा जोत्ने हलो नेपालको भन्दा केही फरक र लामो बिड भएको दाँते कोदाली चलाउँछन् । केन्यामा बोडी नेपालमा खेतको आलीमा भटमास रोपेजस्तै चुच्चो वस्तुले बारीमा रोप्दा रहेछन् ।

केन्याका केही मानिसहरू नेपालीजस्तै परिश्रमी पनि छन् । रोडको दायाँबायाँ छोडिएको बाँझो जग्गा खनेर आलु, मकैको खेती गरेको देखेँ । ती गरिबहरूप्रति माया मात्र होइन उनीहरूबाट प्रेरणा लिनुपर्छ भन्ने लाग्यो । केन्याका कतिपय ठाउँहरू अत्यन्तै उब्जाउशील छ । ती ठाउँहरूलाई अन्नको भण्डार भने पनि हुन्छ । केही वर्षअघि जिम्बाबेमा गोरा कृषकउपर चर्किएको आन्दोलनको कारण धेरै गोरा कृषकहरू केन्या प्रवेश गरेको पाइन्छ । उनीहरूको आगमनसँगै केन्याको कृषिमा थप आयाम थपिएको छ । ठू-ठूला छोप्ने घरहरू बनाएर तरकारी र फूल खेती गर्ने चलन रोचक लाग्यो । युरोपको जस्तै केही भिरालो, समथल र उब्जाउशील जग्गाहरूको राम्रो व्यवस्थापन र उत्पादन अझसम्म मैले कतै देखेकै थिइन् । स्टेडियममा रातभरि उज्यालो बत्ती बालेझैँ कृषि फर्महरूमा रातभरि बत्ती बालिन्छ, त्यो मलाई अनौठो लाग्यो । ती फर्महरूको नजिक बसोबास गर्ने मानिसहरूको जीवनस्तर पनि अलि राम्रै लाग्यो ।

असोजको दोस्रो हप्ता केन्याका कतिपय ठाउँलाई हरियालीले झपक्कै ढाकेको देख्न सकिन्छ । जङ्गलका झारपात र झुप्सीहरू देख्दा गाईवस्तु चराउन लैजाऊँ, घाँस काट्न जाऊँजाऊँझैँ रहर लाग्दछ । केन्यामा एक विशेष प्रकारको चरा पाइन्छ । त्यो चरा नेपालको जुरेली चराजस्तै देखिन्छ । त्यस चराको गुँड रुखको एउटा हाँगामा आँपजस्तै झुण्डिएको हुन्छ । चराको गुड अत्यन्तै परिश्रमले बनेको हुन्छ । त्यो चरा रातभर कराउँछ । त्यो चराको मुख्य विशेषता एउटा भाले चराले ७ वटासम्म गुँड बनाउँछ र त्यसको ६ वटासम्म पोथी हुन्छ ।

केन्याका अधिकांश भू-भाग पानी परेको बेला चाँडै भल बग्ने र चाँडै सुक्ने गर्दछ । हाम्रो देश नेपालको चैत्र, वैशाखमा जस्तै त्यहाँको सुक्खा याममा बेस्सरी धुलो उड्ने गर्दछ । अझ केन्या र नेपाललाई दाँज्ने हो भने धेरै कुराहरूमा समानता र केही कुराहरूमा मात्र फरक भेटिन्छ । मुख्य फरकहरू: केन्याका मानिसहरू काला, अग्ला हुन्छन् । भूमध्यरेखाले केन्याको बीच भागमा काटेको छ । यसरी भूमध्यरेखासँग सिधै नजिक पर्ने भएकोले प्रायः गर्मी हुन्छ । नेपालभन्दा झण्डै ४ गुणा ठूलो केन्यामा खुल्ला र फराकिला भूभागहरू प्रसस्तै पाइन्छ । केन्याको पैसालाई सिलिङ भनिन्छ र सिलिङको मूल्य नेपाली रूपैयासँग ठीक मिल्दछ । केन्यामा सुहेली भाषा बोल्दछन् र सुहेली भाषामा मोटर गाडीलाई गाडी नै भन्दछन् । सुहेली भाषा र नेपाली भाषाबीच मिल्दाजुल्दा शब्दका सम्भावना पनि देखिन्छ ।



समग्रमा केन्याको जीवनस्तर नेपालसँग मिल्दछ । राजधानी नाइरोबीको जीवनस्तर भने काठमाडौँको भन्दा राम्रो देखिन्छ । एड्सको माहामारीको सम्बन्धमा पनि केन्यालाई नेपालले पछ्याइरहेको आभास हुन्छ । केन्यामा विवाह गर्नको लागि एच० आई० भी० भएनभएको स्वास्थ्य परीक्षण गर्नुपर्दछ । त्यो सरकारी नीति मलाई मन पऱ्यो । धेरै कुराहरू मिल्दोजुल्दो भेटिन्छ । बाटाहरूमा माग्नेहरूको चाप पनि उस्तै सङ्ख्यामा भेटिन्छ ।

केन्याका प्रहरीका ड्रेस नेपाल प्रहरीसँग धेरै हदसम्म मिल्दछ । केन्याका स्कुलहरूलाई भने सिनियर र जुनियर भनी छुट्टाएका छन् । केटीहरूको लागि फाल्टो गर्ल स्कुल पनि प्रसस्तै देखिन्छ । बिर्सन नहुने कुरा के छ भने केन्यालीहरू फोटो खिच्ने सम्बन्धमा साह्रै सचेत छन् । हाम्रो फोटो बेचेर पैसा कमाउँछौ भनी आरोप लगाउँछन् । फोटो खिच्न दुर्गम गाउँका मानिसहरूसमेत मान्दैनन् । उनीहरूको वा उनीहरूसँग फोटो खिच्नको लागि पैसा तिरेपछि मात्र अनुमति दिन्छन् ।

हाम्रो देश नेपालजस्तै बहुजात, बहुभाषा, बहुधर्म भएको केन्यामा प्रायः जातिहरूको नाममा प्रशासकीय जिल्लाको नाम भएको पाइन्छ । साम्बुरू जाति बसोवास गर्ने इलाकालाई साम्बुरू जिल्ला नामाकरण गरेका छन् । अर्को रोचक पक्ष के छ भने केन्याका मुख्य व्यापारिक इलाका मोम्बासा, मेलान्डी, बाटमु, डियानी, नाइभासालगायत राजधानी नाइरोबीजस्ता ठाउँहरूमा इटालियन प्रभाव उल्लेख्य पाइन्छ ।

फ्रान्सेली, जर्मनी र बेलायती कृषकहरूलाई ध्यानमा राख्दै अफ्रिकामा उत्पादित सागसब्जी र फलफूल युरोपमा भित्राउन नपाउने प्रतिबन्धलाई खुल्ला गर्ने हो भने केन्याको भविष्य अति उज्ज्वल देखिन्छ । भूमध्यरेखाको देश केन्याको सुन्दरता माउन्ट केन्याको भन्दा उच्च बन्दै जावस् । यो यात्रीको धेरैधेरै शुभकामना ।

हाकुनामा टाटा, जाम्बो । विदा पाएँ, नमस्ते ।

*१९ नोभेम्बर २००६*
*केन्याबाट बेलायततर्फ जहाज यात्रामा*

शीर्षक

४

# गरिब देशको नागरिक हुनुमा बढी मानवता



नमरे बाँचे दैवले साँचे कहीँ त भेट होला । मान्छेको मन पनि खोइ कस्तोकस्तो ! राम्रो चीज पाउने चाहना गर्छौं । सुन्दर चीज सधैँ आफ्नै



साथ राखी राख्न चाहन्छौँ । रमाइलो क्षण सधैँ रहिरहोस् भन्ने चाहन्छौँ तर यी सब असम्भव छन् । त्यसैले यी सबै कुरा प्यारा बनेका हुन् ।

आज बिहान सबेरै हतारहतार लन्डनको हेद्रो एयरपोर्ट आइपुगेँ । सँगै ब्रुनाइ फर्कने साथी ज्याक्लिन डिक्सन र ज्याक्लिन आस्लीलाई भेटेँ । हाम्रो गफ त्यही हिजो सबैसँग बिदावारी भएर छुटेको बारे चल्न थाल्यो । कार्यक्रम सोचेभन्दा राम्रो भएकोले हामी सबै हर्षले प्रफुल्लित छौँ । एयरपोर्टमा ब्रुनाइ एयरलाइन्सको बोर्डिङ खुल्यो । हामी जहाजतर्फ लाग्यौँ । केहीबेरमा जहाजले भुइ छोड्यो । बेलायतको



*अङ्ग्रेजी साहित्यकार भिन्सी ब्राम्लीसँग*

राजधानी लन्डनमाथि उड्न थाल्यो । बेलायतमा विशेष गरी वैशाख, जेठ (मे, जुन) महिनामा असाध्य सुन्दर वातावरण हुन्छ । भाग्यवश आज मे महिनाको दोस्रो हप्ता मौसम पनि राम्ररी खुलेको छ । मैले लन्डन सहरको सुन्दरतालाई जहाजको झ्यालबाट चियाइरहेको छु । बिस्तारै लन्डन सहर छलियो र समथर जमिनमा बसेका गाउँका घर र कृषि फार्मले मलाई असाध्य लोभ्यायो । चिटिक्क मिलेका खेतबारीका चाक्लाहरूमा कतै हरियो गहुँ, कतै पहेलै फुलेका तोरीबारी, कतै हरिया आलुबारी । सायद मेरो जीवनको पृष्ठभूमि

किसाने भएकोले हुनसक्छ । त्यो खेतबारीको सुन्दर दृष्यले मलाई सबैभन्दा धेरै छोएको छ । वृद्धा हुनुभएका मेरो बुबा र आमालाई म सम्झन पुग्छु । यो दृष्य बुबाआमालाई देखाउन पाए कति धेरै खुसी बन्नुहुन्थ्यो होला ? किनकि मेरो बुबाआमाले पूरै जीवन खेतीपातीमा बिताउँदै आउनुभएको छ। लाग्छ, बुबाआमाले निश्चय नै खुब मनपराउनु हुन्थ्यो र भन्नु हुन्थ्यो- छोरा हामी सहर होइन त्यो सुन्दर र विशाल गहुँबारी घुम्न जाऊँ, रमाइला आलुबारी घुम्न जाऊँ र सुनजस्तै पहेँलो तोरीबारी हेर्न जाऊँ ।

बेलायतमा विशेष गरी मे, जुन महिनामा सबै बोटबिरुवा, झारपातहरू कलिला देखिन्छन् र फलफूल लटरम्म फुलेका हुन्छन् । बेलायतमा समरको समयमा **ढुङ्गा पनि फुल्छ** भन्ने भनाइ छ। साँच्चै नै नफुलेका, नफुल्ने बोटबिरुवा प्रायः कमै हुन्छ। जुलाई, अगस्टमा केही गर्मी हुने र अरू महिना प्रायः जाडो हुने भएकोले वैशाख र जेठ महिना बेलायत घुम्न असाध्य राम्रो हुन्छ । संसारको जुनसुकै भागमा रहे पनि वैशाख र जेठ महिनामा बेलायत आउनु राम्रो हो भन्ने मेरो ठहर छ । जहाज निरन्तर ब्रुनाइतर्फ अघि बढिरहेको छ । दृष्यहरू बद्लिन्छन् र ती दृष्यहरू हेरेर म रोमाञ्चित बनिरहेको हुन्छु । मन एकतमासले खेल्न थाल्छ ।

जीवनको अघिल्ला क्षणमा पनि म पुस्तक पत्रिकासँग खेल्न औधी रुचाउने मान्छे। कुनै बेला घरमा मट्टीतेल कम हुन्थ्यो र आमाले भन्नुहुन्थ्यो- फारो गरी मट्टीतेल चलाउनु । राती अबेरसम्म लेखपढ गर्ने मेरो बानी थियो । आमाले थाह नपाइकन मट्टीतेल कोठामा लैजान्थेँ र प्रायः रातको साढे १ वा २ बजेसम्म अध्ययन गरिरहेको हुन्थेँ । मैले **तरुण तपसी** पुस्तक ४ चोटिसम्म पढेँ । सो पुस्तकबाट म ज्यादै प्रभावित छु। जब कक्षा ९ मा पढ्न सुरु गरेँ गोरखापत्र दैनिकको, अर्धवार्षिक र पछि वार्षिक ग्राहक बनेँ । धनकुटाबाट हुलाकमार्फत पठाएको पत्रिका गाउँमा २, ३ दिनपछि प्राप्त गर्थेँ । पत्रिका मेरो हातमा परेको दिन मलाई असाध्य खुसी लाग्थ्यो । सुरुसुरुका एकदुई महिना पत्रिकाको सम्पूर्ण समाचार, लेख, विज्ञापनसमेत पढेर सिध्याउथेँ र असहमत या नयाँ कुरालाई नोट गर्थेँ । ती थुप्रिएका पत्रिकाहरू गाउँका दिदीबहिनीहरूले सिलाइबुनाइको लागि कटाइ सिक्न सदुपयोग पनि गरे । जब म क्याम्पस जान थालेँ तब पत्रकारितातर्फ झनै आकर्षित भएँ र समाज सेवाको पाटो त आफ्नै ठाउँमा छँदै थियो । परिवारभित्र र छरछिमेकमा सैनिक पेशाका अभिभावक अर्थात् लाहुरे वातावरण पटक्कै नभएकाले मलाई लाहुरको बारे केही थाह थिएन र चासो पनि । लाहुरेहरू सोझा सिधा हुन्छन् भनेर गाउँमा कुरा गर्थे र मलाई लाग्थ्यो- सिधै तारको क्याम्पभित्र गएर फर्किन्छन् लाहुरेहरू ।



त्यहाँ लेखपढको माहोल हुँदैन । त्यसबेला पल्टनको लेखपढ्का गतिविधिबारे चर्चा पनि विलकुलै सुनिँदैनथ्यो आजकलजस्तो ।

मेरो जीवनमा अकस्मात् सन् १९९६ मा एउटा घटना घट्यो । मेरो दाजु टेकजङ्गको करकापमा ब्रिट्रिस सेनामा भर्ना हुन जान बाध्य भएँ । त्यस साल ६० हजारमध्येबाट २६० जनामा म पनि एकजना परेँ । सैनिक पेशामा पटक्कै चासो नभएकाले होला । पोखरा बिट्रिस क्याम्पको झण्डै एकमहिने रिक्रुट छनौटमा मलाई चेस्ट नम्बर १३७ दिएको थियो । ब्रिटिस आर्मीमा पास भएको रिजल्ट बोलाउने क्रममा मेरो नम्बर र नाम आउँदा म अलमल्लमा परेँ । जिन्दगीमा केही गर्न सकिन्छ भन्ने आस मार्नुपर्ने भयो । अब जिन्दगी बाँधिन गयो भन्ने पीरले निक्कैबेर रोएँ र रातभरि मन खेल्यो । सँगैका साथीहरू खुसीले घरमा फोन गर्थे । चिठ्ठी लेख्थे मचाहिँ दुःखले रोइरहेँ । भोलिपल्ट बिहान पोखरा क्याम्प परिसरको मन्दिर गएँ, मन अलि शान्त भयो र त्यहीबेला अचानक अन्जानमा एउटा बाचा गर्नपुगेँ । त्यो बाचा यस्तो थियो, "त्यो लाहुरघर मैले सोचेको जस्तै छ भने पनि आखिर, म स्वयम् त्यहाँ जाँदैछु, केही परिवर्तन अवश्य गर्नेछु ।" त्यसबेलाको त्यो बाचा जवानको उन्मादझैँ लाग्छ । सम्झन्छु, आजभोलि आफैलाई लाज लाग्छ। त्यसबेला गाउँघरमा पढालेख पनि कमै थिए, लाटाको गाउँमा गँडाहा तन्नेरी नै थिएछु क्यारे ।

मैले सुनेको थिएँ, हामीलाई तालिम दिने गुरुहरू जुङ्गादारी पालेका हेर्दै डरलाग्दा र हिंस्रक हुन्छन् । म बेलायतको अल्डरसट सहरनजिक चर्चकुर्कहममा तालिमलाई पुगेँ । हामीलाई पर्खिरहेका केही मान्छे थिए । मैले सबैभन्दा पहिले उनीहरूको जुङ्गादारी हेरेँ, उनीहरूको जुङ्गादारी थिएन । डरलाग्दा हुन्छन् भन्थे तर उनीहरू त बेलायतको जाडोमा बसेकाले होला हामीभन्दा सुन्दर देखेँ र म छक्क परेँ । खाना आधा पेटमात्र दिन्छन् भनेको सुनेको थिएँ तर त्यहाँ आफ्नो मनपर्ने खानाहरू रोजेर जतिधेरै पनि खान पाउँदो रहेछ, म झन छक्क परेँ । हामी नयाँ भर्नाका मान्छे लेखापढमा अलि राम्रो छौँजस्तो लाग्थ्यो तर पल्टनमा हुनु भएका सिनियर गुरुहरू हामीभन्दा धेरै पढेका भेट्दा त झन् म खक्रकै भएँ । विदेश बसेकाले उनीहरूलाई देशको बारेमा ज्ञान हुँदैन होला भन्ने सोचेको थिएँ तर अचम्म विदेशमै नेपाली ताजा समाचार भन्ने बी० एफ्० बी० एस्० गोरखा रेडियो रहेछ। पल्टनमा बोलिने रमाइलो वाक्य छ "पढ्न पर्दैन भनेर भर्ती भा'को म फसिएँ" । नेपालमा पढ्न मन नलागे अटेर गर्न पाइन्छ, अल्छी गर्न पाइन्छ । पल्टनमा अटेर र अल्छी गर्न नपाइँदो रहेछ । पल्टनमा पढ्नुपर्ने विभिन्न तहहरू रहेछ । ती तहहरू पास गर्न निक्कै गाह्रो रहेछ । पल्टनमा पढिने साधारण अङ्ग्रेजी पुस्तक हाम्रो देशको

स्नातकमा पढाइ भएको पाउँदा पछिल्लो पल्ट म छक्क परेको थिएँ। तालिम सिद्धाएर ब्रुनाइमा आइपुगेलगतै पहिलोपटक नियमित सैनिक अभ्यासको क्रममा हेलिकप्टरले मलाई ब्रुनाइको टेलिसाई नदीनजिकको स्कुलमा ओराल्यो । त्यहाँ विद्यार्थीहरू देख्दा मलाई साथीहरूसँगै पढ्न जान मन लाग्यो। पढ्ने रहर हुँदाहुँदै भर्ती भएर होला धेरै मन रोयो ।

केही गरौं भन्ने विचार अर्थात् इच्छालाई दबाएर राख्न नसकिँदो रहेछ । केही साथीहरूसँग मिलेर एउटा पत्रिका झिक्ने सल्लाह भयो । त्यसबेला धेरैको समर्थन थियो, यद्यपि म स्वयम्, सुरेन्द्र इङनाम, ईश्वर चाम्लिङ, विष्णु जिमी र सोम थुलुङ विशेष खट्नेमा



थियौं र अन्य थुप्रै सहयोगी साथीहरू पनि थिए। जुन पत्रिका सन् १९९८ मा पहिलो पटक प्रकाशन गरेका थियौं। यो साहित्य तथा विविध पत्रिका आज पनि निरन्तर प्रकाशित हुदै आएको छ। त्यसको नाम **'प्रवासी वेदनाका आवाजहरू'** हो । पत्रिका प्रकाशनलाई कानुनी प्रकृया त आफ्नै ठाउँमा विशाल पहाडझैँ थियो । गोर्खालीहरूको इतिहासमै संस्थागत रूपमा प्रकाशन गर्ने निर्णयलाई सही ठहर गर्दै हिम्मत गरिछाड्यौं। पत्रिका प्रकाशन प्रारम्भको केही



समयपछि दोस्रो गोर्खा पल्टनका तत्कालीन गोरखा मेजर सा'बले ३ पटक र कम्पनी सहायक सा'बले १ पटकलगायत प्लाटुन कमान्डर सा'बले गर्दा जम्मा ५ पटकभन्दा बढी वहाँहरूकै कार्यलयमै बोलाई मसँग स्पष्टीकरण लिनुभयो । मलाई विभिन्न डर देखाउनुभयो, धम्काउनुभयो, सम्झाउनुभयो र माया पनि गर्नुभयो । ती सब स्पष्टीकरणको तयारी हामी मिलेर गर्थ्यौं र स्पष्टीकरणपछिको घटनाबारे हामी बसेर छलफल गर्ने गर्थ्यौं । त्यसको फलस्वरूप आज हाम्रो पल्टनमा साहित्य र सङ्गीतको वातावरण उत्साहजनक रहेको छ । त्यस्तैगरी मेरो आफ्नै अघिल्लो पुस्तक **'गृहयुद्धको पीडा'** को सम्बन्धमा पनि कम्पनी कमान्डर सा'ब र विभाग प्रमुख सा'बले मसँग स्पष्टीकरण लिनुभयो। त्यसको आफ्नै दर्दको पाटो छुट्टै छँदैछ।

पत्रिका प्रकाशनको सम्बन्धमा वहाँहरूलाई उद्देश्य र प्रकृयाहरू स्पष्ट पारेपछि अन्ततः वहाँहरूले पनि थुप्रै सहयोग गर्नुभएको छ। सेवारत सेनाहरूबाटै निरन्तर प्रकाशन भएकोले धेरैलाई भय थियो । यस्ता काम गर्नेहरू लाहुरघरमा काम लाग्दैन भनी कुरा काट्थे । यी सिर्जनात्मक काम गर्नेहरू कति काम लागेलागेन्न ? कति जना कस्तो र केकेका शिकार भए एकदिन समयले निश्चय नै लेखाजोखा गर्ने नै छ । आफ्नो सिर्जनासँग शङ्खे किराझैँ हेर्दै लुक्दै गर्नुपर्ने, योग्यता लुकाउनु पर्ने संस्कारको लाहुरघरमा त्यहीबेला केही परिवर्तनको थालनी भएको आभास हुन्छ। हाल लाहुरघर साहित्य र सङ्गीतको लागि उर्वरभूमि बनेको छ। सन् २००१ मा **'प्रभात प्रवासी साहित्य समाज'** पछिबाट नाममा सुधार गरी **'प्रवासी नेपाली सिर्जनशील समाज'** स्थापना गऱ्यौं । त्यसबेला पनि सबैको सहयोग थियो, यद्यपि ईश्वर चाम्लिङ, प्रेम रिवुसाल, रामकृष्ण सुनुवार, मुलिवीर राईलगायतका हामी पहिलो छिमलका भए पनि नयाँ छिमलमा भूमिराज, धनिराम, विजयप्रकास, चोक, किसन, नरेशमणि, आनन्द, मिजास, जगत्, नवललगायत दर्जनौं सर्जकहरू उदाएका छन् नअस्ताउने गरी। केही उतारचढावको अन्तरालपछि **'गोरखा मेजर लक्ष्मीभक्त सा'बज्यू**बाटै **प्रभात साहित्य पुरस्कार**' को पनि स्थापना भएको छ। सम्झन्छु, नयाँ र राम्रो कामको लागि अप्ठयाराहरू आए पनि सहयोग सबैबाट मिल्दो रहेछ।

आफ्नो जिन्दगीको आफैले मूल्याङ्कन गर्दै यथार्थ अर्थ्याउन एकदिन यस्तो कविता लेखेँ-

***हेर्दाहेर्दै सँगैका साथी***
***प्रगतिका शिखर चढेर गए***
***हेर्दाहेर्दै सँगैका साथी***
***ठू-ठूला छहराबाट झरी गए***
***मलाई नत प्रगतिले चुम्न सक्यो***
***नत छहराले तान्न सक्यो***
***डिलमा बसेर***
***अरू रमितेहरूले झैँ***
***मेरा साथीहरूलाई***
***हेरी रहेको छु ।***

मेरो जागिर झण्डै मर्नु बाँच्नुको दोसाधमा पुग्यो । सङ्घर्षको निक्कै लामो समयपछि अचानक मलाई एजुकेसन सेन्टरमा पठाइयो । सेना र सेनाका परिवारको शिक्षाको लागि काम गर्नुपर्ने जिम्मेवारी आयो । एजुकेसन सेन्टरमा लाइब्रेरीको पनि व्यवस्था गर्नुपर्ने थियो । त्यसैले म त्यो काम गर्न उत्साहित भएँ किनकि मलाई मनपर्ने ठाउँमध्ये एक लाइब्रेरी हो । पुस्तकहरूको माझमा घुम्दा मलाई बेग्लै आनन्द आउँछ । दार्शनिक कार्लमार्क्स अध्ययन गर्न लाइब्रेरीमा मुर्छा परुन्जेल बस्थे रे, म उनको जीवनदेखि अति प्रभावित छु । त्यसैले लाइब्रेरी मेरो मनपर्ने ठाउँमध्येको एक हो ।

लाइब्रेरी भनेको पुस्तकहरूको फूलबारी हो । विभिन्न ज्ञानहरूको सङ्गमस्थल हो । त्यसले हामीलाई रोमाञ्चकारी बनाउछ । आज मेरो एजुकेसन सेन्टरमा सानो एउटा लाइब्रेरी छ । जहाँ २ हजार ५ सय पुस्तकहरू साथै ५ वटा इन्टरनेट कम्प्युटर र कलर फोटोकपी मेसिन छ । त्यो लाइब्रेरी हेर्ने जिम्मेवारी पनि मलाई छ । मुख्यगरी लाइब्रेरीले कुनै पनि विषयको बारेमा जानकारी प्रकाशमा ल्याउने काम गर्दछ । बेलायती सैनिक पुस्तकालयले दोस्रो श्रेणीको मान्यता दिएपछि लाइब्रेरीको महत्व नै अर्को बनेको छ ।

सैनिक शिक्षा विभागको आयोजनामा गत **मे ९ देखि ११, २००६** सम्म चल्ने विचार गोष्ठीमा जानुपर्ने भयो । ब्रुनाइबाट बेलायत जान जहाजमा मात्र १८ घन्टा लाग्ने भएकोले त्यो जाने काम निक्कै गाह्रो थियो । अन्ततः सहभागी बन्न



लन्डननजिक अल्डरसटको Porters Hotel मा पुगेँ । विभिन्न ६ देशबाट सहभागी हुन ८५ जना भेला भएका थियौँ । तीमध्ये केटा हामी १० जना मात्र थियौँ र बाँकी सबै महिलाहरू थिए । ग्रीक, पोर्चुगिज, इङ्लिस, स्कटिस, फिजियन, घानाको भाषा, नेपाली भाषालगायत विभिन्न भाषीहरू भएकाले बेलाबेला सम्पर्कमा अप्ठ्यारो हुन्थ्यो । विभिन्न लवजको बोली सुन्दा मलाई बेग्लै आनन्द लाग्थ्यो । भेला भएका दिदीबहिनीहरू प्रायः सधैँभरि सपिङको कुरा गर्थे । नेपाली म मात्र भएकोले उनीहरू मसँग गफ गर्न मन पराउथे । विचार गोष्ठीमा धेरै गहन महत्वका विषयबारेमा छलफलहरू भए । पहिलो दिनको बेलुकी खानापछि भव्य हाजिरी जवाफ प्रतियोगिता भयो ।

मेरो लागि शिक्षासम्बन्धीको विचार गोष्ठी यो दोस्रो थियो । गोष्ठीबाट केही सिक्छु होला, अङ्ग्रेजी तौरतरिका केकस्तो रहेछ भनेर बुझ्ने कुरामा म केन्द्रित थिएँ । दोस्रो दिनको बेलुकी अफिसियल खाना अघिल्लो दिनझैँ थियो । होटलमा ३ वटा ठू-ठूला कोठाहरू थिए । दोस्रो दिन क्वीन इडवार्ड कोठामा खानाको व्यवस्था थियो । खानाको साथमा अङ्ग्रेज प्रचलनको पेय पदार्थ पनि राखिएकोले रमाइलो वातावरणमा कविता प्रतियोगिता सुरु भयो । कार्यक्रमको अन्त्यमा प्रसिद्ध फरवाड इन्टु हिल (Forward into Hill) पुस्तकका लेखक भिन्सी ब्राम्ली (Vince Bramley) लाई निमन्त्रणा गरिएको रहेछ । वहाँले आफ्नो पुस्तकका बारेमा केही कुरा भन्नुभयो । हामी वहाँको कुरा सुनेर दङ्ग पर्‍यौँ । जब वहाँको कुरा सुन्न पाएँ तब मैले यसपटकको गोष्ठीमा केही ठूलै कुरा पाएको अनुभूति गरेँ । वहाँले जम्मा २ वटा पुस्तक लेख्नुभएको रहेछ । पहिलो पुस्तक फोकल्यान्ड युद्धबारे रहेछ, जहाँ आफै ब्रिटिसको तर्फबाट युद्धमा जानुभएको र तिनै अनुभूति र वास्ताविकता लेख्नुभएको रहेछ । वहाँको उक्त पुस्तक अर्जेन्टिनियन भाषामा पनि अनुवाद भएको जानकारी गराउनुभयो ।

आमन्त्रित अतिथि लेखक भिन्सी ब्राम्लीले आफ्नो मन्तव्य सकेलगतै आयोजक परिवारले मलाई थाह छ तपाईँ ब्रिटिस हो भनेर धन्यवादको हात मिलाउँदै रेडवाइन रक्सीको बोतल वहाँको हातमा थमाइदियो । म अझसम्म त्यो वाक्यको अर्थ खोजिरहेको छु । मैले थाह पाएअनुसार स्कटल्यान्ड हुस्की र रमको लागि निक्कै प्रसिद्ध ठाउँ हो । मैले लेखकसामु गएर आफ्नो परिचय दिएँ र वहाँले भन्नुभयो- फोकल्यान्ड युद्धमा गोर्खालीलाई मुख्य गरी मिडिया युद्धमा लगिएको जस्तै भयो । मैले मेरो आफन्त पनि फोकल्यान्ड युद्धमा सहभागी भएको कुरा बताएँ । त्यो कुराले वहाँ खुसी हुनुभयो । फिजियन साथी भिभी, जर्मनीबाट आएकी

क्लेय पनि आइन् र हामीले वहाँसँग फोटो खिच्यौं । केहीबेर गफ गर्दै थियौं । साइप्रसबाट आएका साथीहरूले अब हाम्रो पालो भनेर वहाँलाई तानेर लगे । हामी हेरेको हेर्‍यै भयौं । हुन पनि त्यहाँ हाँस्ने हसाउँने । रमाइलो वातावरण बढी चलेको थियो । साँझको कार्यक्रम निर्धारित समयभन्दा ढिलोसम्म चलिरहेको थियो । ब्रिटिस डिनरमा खानाको साथमा रेड वाइन वा ह्वाइट वाइन रक्सी दिने चलन हुन्छ । कार्यक्रम सिद्धिने बेलामा प्रायः सबैजना मातिसकेका थिए । मानौ त्यहाँको वातावरण नै बेग्लै बनिसकेको थियो । त्यहाँ आयोजकहरूले बोलिरहेका हुन्थे तर समूहमा बसेका प्रत्येक टेबलबाट ठू-ठूला हाँसो निस्किरहेको हुन्थ्यो ।



अन्तिम दिन, अन्तिम साँझ भएकोले एक आपसमा भाषा संस्कृतिको कुरा चलिरहेको थियो । महिलाहरूको मात्र समूहमा चाहिँ प्रायः सपिङकै धेरै चर्चा हुन्थ्यो । डिनरको कार्यक्रम सिद्धिएलगतै म बाहिर निस्किएँ । त्यहाँ १५, १६ जान दिदीबहिनीहरूले अङ्ग्रेजी अक्षरको आधारमा देशको नाम भन्ने खेल सुरु गरिसकेका थिए । मलाई पनि बस्न आग्रह गरे र म बसेँ । मेरो पालो आयो तर खेलको नियम नै स्पष्ट नभएकोले म चाँडै खेलबाट बाहिरिएँ ।



होटलको बार निक्कै आकर्षक थियो । म त्यसतर्फ लम्किएँ । त्यहाँ एकजना फिलिपिन्सको अधवैशेँ छोरा मान्छे वेटर थियो । म केहीबेर त्यही बसेर रमिता गरिरहेँ । साइप्रस टोलीमा एकजना दिदी आन्थोला नामकी र पानीकोस साथीसँग गफ भयो । उनीहरूले बेलायतले आफ्नो देश साइप्रसलाई शोषण गरेको तीता गुनासाहरू पनि धेरै गरे । दिदी आन्थोलाले नेपाल घुम्न आउने रहर व्यक्त गरिन् र मैले उनलाई काठमाडौं आएर मेरै घरमा बस्न आग्रह गरें । रात निक्कै बितिसकेको थियो । हामी आ-आफ्नो कोठातर्फ लाग्यौं ।

भोलिपल्ट बिहान ९ बजे अन्तिम कार्यक्रम सुरु भयो । समग्र कार्यक्रमको समीक्षालगायत छलफलपछि साढे ११ बजे कार्यक्रमको कोठाबाट बाहिर निस्कियौं । सबै जनाले होटल छोड्ने भएकोले हतारहतार म सामान लिन कोठातर्फ जाँदा मेरो कोठा नं. २२६ को नजिक छ जना नेपाली दिदीबहिनीहरू काम गरिरहेका थिए । वहाँहरू पोखरा, लमजुङ र ललितपुरका रहेछन् । एउटी दिदीले त त्यही होटलमा काम गरेको ६ वर्ष भइसकेको कुरा बताइन् । अर्काको देशमा नेपाली चेलीहरूसँग भेट हुँदा धेरै आत्मीय लाग्यो । वहाँहरूसँग केहीबेर गफ गर्दागर्दै निक्कै समय बितेछ, पत्तै भएन । अन्तमा वहाँहरूसँग विदा मागेर म होटल काउन्टर झरें तर त्यहाँ कोही पनि थिएनन् । सबैजना बाटो लागिसकेका थिए । मलाई घाना र फिजीका २ जना साथीहरूले अटोग्राफ भर्न अनुरोध गरेका थिए र मैले हुन्छ भनेको थिएँ । अफसोच उनीहरूले मलाई पर्खे होलान्, खोजे होलान तर भेट्टाएनन् र उनीहरू बाटो लागे होलान् । मलाई भित्रै मनदेखि खल्लो लाग्यो । अढाइ दिन हल्ला गर्ने साथीहरूसँग राम्ररी विदा हुन नपाउँदा न्यास्रो लाग्यो । नेपाली साहित्य र लिम्बू साहित्यको सन्दर्भ बोक्ने म निर्माता रहेको **"मृदुल पदम"** डकुमेन्ट्रीको १ प्रति होटलका म्यानेजर माया दिदीलाई उपहार दिएँ । बेलायतजस्तो ठाउँमा त्यति ठूलो होटलको म्यानेजर नेपाली चेली देख्दा मलाई साह्रै गौरव लागेको थियो । अन्य सहभागीहरूले पनि नेपाली म्यानेजर देखेर अनौठो मानेका थिए । हामी नेपालीहरू बेलायतमा आजकाल छ्यापछ्यापती छरिएका छौं । कहिलेकाहीँ नेपाल नै बेलायतमा सऱ्यो कि भनेर ठट्टा गर्न मिल्नेसम्मको हाम्रो उपस्थिति बढेको छ ।

बेटर दाइ सुरजलाई खोजें, भेटिन् र भाइ गयो भन्दिनु होला भनेर माया दिदीलाई खबर छोडेर बाटो लाग्ने तर्खर गर्दै थिएँ । ठीक त्यसैबेला बोलाएको ट्याक्सी अगाडि आइपुग्यो । सबैलाई "बाइबाइ" को हात हल्लाउदै बाटो लागेँ ।

ट्याक्सी चालक वृद्धा भलाद्मी थियो । उसले मलाई नानी गोरखाली हो भनेर सोध्यो । मैले हो भनी उत्तर दिएँ । "पहिले यो अल्डरसट इलाकामा टु पारा गोरखा कम्पनी थियो । क्वीन एलिजाबेथ ब्यारेक चर्चकुर्कहममा पनि तालिम गर्ने ठाउँ थियो । किन हो गोरखाली सेनाहरू आजभोलि पहिले जस्तरी त्यहाँ छैनन् । दुई वर्षअघि आर्मी जेनरल ज्याक्सन यहाँ आउँदा मैले उसलाई यही प्रश्न सोधेको थिएँ । सरकारको काम हो हामीले मान्नै पऱ्यो जनरलले उत्तर दिएको थियो" उसले भन्यो । अल्डरसटमा धेरै सेनाहरू हुँदा एकदम राम्रो वातावरण थियो । "अहिले यहाँ धेरै ड्रग खाने मान्छेहरू छन् । पहिलेजस्तो राम्रो वातावरण छैन" भनेर उसले गुनासो पोख्यो । मैले थपेँ, "अहिले त अल्डरसट इलाकामा धेरै नेपालीहरू छन् । समस्याहरू आउछन् होला नि ?" टाउको हल्लाउँदै उसले "नो नो त्यस्तो समस्या केही छैन" भन्यो ।

ब्रिट्रिस सेनामा २२ वर्ष सेवा गरेर पेन्सन आएका वृद्धा मान्छे यसरी ट्याक्सी ड्राइभर गरेर जीविकोपार्जन गरेको र गोर्खालीहरूप्रति उसको सहानुभूति देख्दा मेरो मन पनि साँच्चै पग्लियो । सायद म स्वयम् पनि सेनामा सेवारत भएर होला निक्कै सोचमग्न बन्न पुगेँ । रेल स्टेसन आइपुग्यो म उत्रिएँ । बूढोमान्छे "बाइबाइ" को हात हल्लाउँदै आफ्नो बाटो लाग्यो । म उसलाई हेरिरहेँ, विचराका गुनासो चर्चकुर्कहमको गोरखा क्याममा गोरखा करी खान पार्टीमा गोर्खालीहरूले बोलाइरहन्थे आजकाल सुनसान छ । उसको त्यो गुनासो यथार्थ र मर्मस्पर्शी लाग्यो । वृद्धा ट्याक्सी ड्राइभरको मसँगको व्यवहार बुबा छोराको जस्तो लाग्यो । अल्डरसटबाट लन्डन पुग्न झण्डै १ घण्टा रेलमा यात्रा गर्नुपर्छ । वास्तवमा आर्मी क्यापिटल टाउनको नामले चिनिने अल्डरसटमा हाल कमै आर्मीहरू बस्दा रहेछन् ।

अल्डरसट रेल स्टेसनमा नोर्दन आयरल्याडबाट कार्यक्रममा सहभागी हुन आएका जोनलाई भेटेँ । साइप्रसकी दिदी आन्थोलालाई फेरि त्यहीँ भेटेँ, खुसी लाग्यो । रेल आयो, म जोनसँग नजिक बस्न गएँ कारण जोनको बोलाई साह्रै अनौठो थियो । ऊ लगातार बोलिरहन्थ्यो । जुङ्गा पालेका जोनको बोली बुझ्न गाह्रो पनि हुन्थ्यो । त्यसैले मलाई रमाइलो लाग्थ्यो ऊ । विशेषतः ऊ तमाखुजस्तो काठमा सुर्ती राखेर तानिरहेको हुन्थ्यो । गफगाफ चल्दाचल्दै जोन बीचबाटो रिडिङमा उत्रियो ।



त्यसपछि साइप्रसकी दिदीसँग मेरो गफ चल्यो । उनी पनि लन्डनको नजिक उत्रिइन् । त्यसपछि कार्यक्रमका साथीहरू कोही पनि मसँग रहेनन् ।

एकएक गरी साथीहरूसँग छुट्नुपर्दा कताकता मेरो पहाडघर धनकुटाको बाल्यकालको याद आयो । रमाइलो मौसममा आउने दसैं तिहारमा सानो छँदा दिदीहरू हाम्रो घर आएर फर्कँदा नमिठो लाग्थ्यो । आमा रुनुहुन्थ्यो । त्यस्तै लाग्यो । गाउँका मेला बजारमा आफन्त सोल्टी-सोल्टिना भेट भएर छुट्ने बेलामा नमिठो मानेझैँ निक्कै खल्लो लाग्यो । रेल लन्डनतर्फ लम्किरहेको थियो । रेलबाट बाहिर मेरा आँखाहरू जुधिरहेको हुन्छ । कलिला पालुवाहरूको हरियाली र न्यानो हुने गरी लागेको घामले बेग्लै अनुभूति दिइरहेको थियो । रेल लन्डन वाटरलु स्टेसनमा रोकियो ।

म लन्डन सहरको भुइमुनि चल्ने रेलतर्फ लाग्छु । जमिन भित्रभित्रै लन्डन सहरको कुनाकुना पुग्ने अन्डरग्राउन्ड रेलबाट पशिचम लन्डनको अक्सब्रिज भन्ने ठाउँमा पुगेर ट्रान्जिट कोठामा आफ्नो सरसमान राखेर पुनः लन्डनको विभिन्न ठाउँ घुम्न निस्किएँ । पूर्णिमा अर्थात् बुद्ध जयन्तीको अघिल्लो दिन भएकोले आकाशमा जून ढकमक्क लागिरहेको थियो । राती अबेर ११ बजेसम्म म लन्डन सहर घुमेर कोठा फर्किएँ । भोलि बिहान सबेर जहाजमा ब्रुनाइ फर्कनुपर्ने भएकोले सरासर ओछ्यान पसेँ । केही समय मन खेलिरहयो ।

आस गरेभन्दा कार्यक्रम राम्रो भयो । भाषा, संस्कृति र देशदेशको जानकारी लिनेदिने सुवर्ण अवसर मिल्यो । यस्तो कार्यक्रम फेरिफेरि भइरहोस् । व्यक्तिगत घमण्डभन्दा राष्ट्रिय घमण्ड अलि बढी हानिकारकझैँ लाग्यो । अङ्ग्रेज साथीहरू प्रायः आफैमात्र गफ गर्थे । हामी जर्मनीका, साइप्रसका, फिजीका, घानाका, नेपालका, जिब्राल्टाका आपसमा सौहार्दपूर्ण वातावरणमा गफ गरिरहेका हुन्थ्यौँ । संस्कार संस्कृतिको विषयमा छलफल हुन्थ्यो र विचार साटासाट गर्थ्यौँ । त्यसैले मलाई लाग्यो गरिब देशको दुःखी नागरिक हुनुमा बढी मानवतापन हुन्छ । आफूले आफैलाई सम्झाएर चित्त बुझाएँ । देश गरिब बनाउनेहरूसँगको गुनासो साँचिराखेँ । नेपालीहरूको तर्फबाट म एक्लैले भए पनि प्रतिनिधत्व गर्न पाएकोमा खुसी मानेँ । यस्ता अनेक तरङ्ग उठे त्यतिकैमा म भुसुक्कै निदाएँ ।

*१५ मे २००६*
*लन्डनबाट ब्रुनाइतर्फको यात्रामा*

शीर्षक

५

# गुफाको राजधानी मुलू यात्रा



हामीले यात्रा गरेको लगभग हप्ता दिन भयो। दुईचार दिनदेखि मेरो मनमा कुमार दाइले अङ्ग्रेज साथीलाई भनेको कुरा झल्झली



दोहोरिरहेको छ। सुत्ने बेला, फुर्सदको बेला पटकपटक। छोटो यात्रा विशेष यात्रा। मेरो ठीक अगाडि अङ्ग्रेज साथी ब्रस, आलेन्, दाहिनेपट्टि कुमार दाइ, राम दाइ र देब्रेपट्टि सुश्री म्याडी छिन्। हाम्रोअगाडि सजिसजाउ गोलो टेबल थियो। त्यसको वरिपरि बसेर हामी बिहानीको खाजा लिँदैछौँ। खाजा खाने र गफ गर्ने काम सधैँझैँ चलिरहेको थियो। हाम्रो ब्रुनाइ ग्यारिजन एजुकेसन सेन्टरले बेलायतको केन्ट विभागबाट निरीक्षक मण्डल झिकाई एजुकेसन सेन्टरको निरीक्षण गराएका थियौँ। त्यसको परिणाम अत्यन्तै राम्रो भएकाले हामीमा थप उमङ्गको अनुभूति भइरहेको थियो। हाम्रो सक्रियतामा सेन्टरमा धेरै कोर्सहरू चलिरहेका थिए। हाम्रो काम अन्यत्रजस्तो नदेखिए पनि



हामीले खुबै मेहनत गरिरहनुपर्ने हुन्छ। अङ्ग्रेज साथी आलेन् अक्सर ऊ हाम्रो विभागको प्रमुख, उसको विदुर बुबा बेलायतबाट ब्रुनाई घुम्न आउने मौकामा हामी एजुकेसन स्टाफ बाहिर घुम्न जाने निधो गरेका थियौँ। मलेसियाको कोटाकिनाबालु जाने कुरा चल्यो, मैले "मुलु केभ अर्थात् मुलू गुफा जाऔँ" भन्ने प्रस्ताव राखेँ। अन्य विविध कारणले गर्दा पनि साँच्चै नै मुलू गुफा जाने अन्तिम निर्णय भयो।

सानो परिवार, सुखी परिवार भनेझैँ हामी स्टाफहरू थोरै भएकाले अन्य यातायातको व्यवस्था नगरी आ-आफ्नै यात्रा साधनमा ब्रुनाइबाट मलेसियाको मिरी एयरपोर्टतर्फ शुक्रबार बिहान साढे ७ बजे बाटो लाग्यौँ । ब्रुनाइ र मलेसियाको इमिग्रेसनबाट छिर्नुपर्ने, २ वटा ठू-ठूला पुल पार गरेर जानुपर्ने भएकोले एयरपोर्ट पुग्न झण्डै ढिला भइसकेको थियो । हतारहतार एयरपोर्ट पुग्यौँ । भाग्यवश बोर्डिङ काउन्टर बन्द हुन ५, ७ मिनेट बाँकी रहँदा हामी त्यहाँ पुगेर बोर्डिङ लिई बिहानको १० बजेको फ्लाइटमा मुलू गुफातर्फ उड्यौँ । महाजङ्गलको बीचमा रहेको मुलू गुफा पुग्न मलेसियन पोकर एयरलाइन्सलाई ३० मिनेट लाग्यो । जहाजबाट भुइतर्फ हेर्दा सारवाक राज्य मलेसियाको खेती प्रणाली एकदमै व्यवस्थित लाग्यो । स-साना डाँडाकाँडाहरू प्रसस्त देखिन्थे तर साह्रै रमाइलो आनन्दको डाँडाहरू, कतै भीरपहरा नभएका मेरो गाउँको थामडाँडा इलाकाजस्तै देखिन्थ्यो ।

हाम्रो जहाज अवतरण हुने एयरपोर्ट जङ्गलको बीचमा थियो र त्यसको सामुन्ने २ वटा ठू-ठूला डाँडाहरू तर एकदमै रोमाञ्चक थिए । जहाज अवतरण भएपछि पहाडको काखमा पुगेझैँ अनुभूति भयो । एयरपोर्टको छेउमा दुइचारवटा स-साना सुन्दर घरहरू थिए । जब एयरपोर्टको अध्यागमनबाट बाहिर निस्कियौँ तब हाम्रो नामको प्लेट बोकेका मान्छेलाई भेट्यौँ । शिष्टाचारको आदानप्रदान गर्दै थियौँ । त्यसैबेला मैले नजिकैको भित्तामा लेखिएको कुरा पढ्न पुगे । त्यहाँ लेखिएको थियो "service with smile" साँच्चै नै मलेसियाले शिष्टताको क्षेत्रमा, आर्थिक प्रगतिको क्षेत्रमा नाटकीय हिसाबमा प्रगति गरिरहेको कुरा त्यस मुलू गुफाको एयरपोर्टले थप पुष्टि गरिरहेको थियो । हुन त हामीमा उत्सुकता थियो, हौसला थियो, खुसी मन र रमाइरहेका आँखाले सबै चीज राम्रोराम्रो देखेको हुनसक्छ । यद्यपि त्यस इलाकाको सफासुग्घर, सजिसजावटले वास्तविकता बोलिरहेको थियो ।

हरियो नेपाली पासपोर्ट बोकेर विश्वको विभिन्न मुलुकमा पुग्दा पाइने दुःख र अपमानले गर्दा हीनताबोध हुन्छ । प्रत्येक दिन नेपालको खस्कदो आर्थिक अवस्था र हिंसाहत्याले हामीलाई २४ सै घण्टा पोल्नेगर्छ । हाम्रो दुर्दशा सम्झँदा म आफूलाई नीच सम्झन बाध्य हुन्छु यद्यपि मेरो देश एकदिन समुन्नत बनाउने कसम खाँदै आफूले आफैलाई सान्तवना दिँदै चित्त बुझाउँछु । जब नेपालको दृष्यसँग मेलखाने ठाउँमा पुग्छु तबतब मलाई मेरो देश नेपालको बिग्रँदो अवस्थाको बारे पीडा बढेर आउँछ । यदि मेरो गाउँठाउँका रमाइला स्थानहरूमा विदेशी



पर्यटकलाई घुमाउन पाएको भए कस्तो हुन्थ्यो ? मुलू एयरपोर्टको नजिकको बिजुली, बाटोजस्तै मेरो देशको गाउँगाउँमा पनि सुविधा बिस्तार गर्नपाएको भए कस्तो हुन्थ्यो ? अर्थात् कहिले यहाँकै जस्तो मेरो ठाउँमा विकास गर्ने इत्यादि सोच मनमा खेलिरहेको हुन्छ ।

एउटा सानो हरियो बस हाम्रोसामु आएर रोकियो । हामीले आ-आफ्नो झोलाहरू समाएर त्यही बसमा चढेर बाटो लाग्यौँ । मैले सुश्री म्याडीलाई सोधेँ, “यो ठाउँ कस्तो लाग्यो ?” प्रश्न नसकिँदै उनले भनिन्, “मलाई त सधैँ यही बसिरहूँ लाग्यो, साह्रै राम्रो ! मलाई खुब मन पर्‍यो ।” त्यो घनघोर जङ्गल क्षेत्र हो । सानो मोटर बाटो भए पनि कालोपत्र गरिएको छ । झण्डै १० मिनेटको यात्रापछि एउटा पुलमा पुग्यौँ । पुल काटेर पारिपट्टि टेकेकै ठाउँ रोयल मुलू रिजोर्टको भव्य स्वागतद्वार रहेछ । त्यहाँ एक युवक र युवती आफ्नै भेषमा सजिएर हाम्रो स्वागतार्थ बसिरहेका थिए । हामी त्यो विशाल रिजोर्टभित्र प्रवेश गर्नेवित्तिकै हामीलाई मलेसियन चलनअनुसार पिउने वस्तु दिएर स्वागत गरे । हामीले खुसीसाथ स्वीकार गर्‍यौँ ।

हामी सबैले आ-आफ्नो कोठा पायौँ । मेरो कोठा नम्बर ५०६ थियो र रिजोर्टको बनावट हेरेँ, बेग्लै रमाइलो लाग्यो । जङ्गलको मध्यभाग नदीको छेवैमा रहेको यस रिजोर्टमा जमिनदेखि झण्डै १२ फिट उचाइ भएका सिमेन्टका खम्बाहरू गाडेर बनाइएको पूरै काठका अनगिन्ती घरहरू छन् । झण्डै २ कि० मि० क्षेत्रफलमा रहेको यस रिजोर्टको बीच भागमा पौडीपोखरी रहेको छ । बिहानैदेखिको कुदाकुदले म भोकाएको थिएँ र तुरुन्त दिउँसोको खानापछि पौडी खेल्नथालेँ, धेरै रमाइलो स्वमीङपुल भएकोले निक्कै लामो समय खेलिरहे ।

हाम्रो लागि खटिएका गाइड डेन्नीले बोलाएको समय दिनको ठीक २ बजे रिजोर्ट बाहिर भेला भयौँ । केहीबेरपछि बस आइपुग्यो र विश्वकै सबैभन्दा ठूलो र लामो गुफा डियर (Deear Cave) घुम्न बाटो लाग्यौँ । झण्डै १५ मिनेटको यात्रापछि ओर्लिएर ४ कि० मि० को बाटो हिँडेर पुग्यौँ । डियर गुफाको नजिक अर्को गुफा पनि छ, जुन अत्यन्तै कलात्मक छ । मैले केही वर्षअघि मलेसियाको सारवाक राज्यकै बिन्तुलू सहरनजिक रहेको सुन्दर ओढार (Naha Cave) घुमेको थिएँ र मनमनै लाग्यो सारवाक क्षेत्र विश्वकै गुफाहरूको राजधानी हो । सारवाक च्याम्बर, यो विश्वकै ठूलो गुफा हो । यसभित्र १६ वटा फुटबल मैदान अर्थात् ६० वटा जेट विमान राख्न सकिन्छ । तर यो ठाउँमा एड्भान्चर गर्ने बाहेकलाई प्रवेश

निषेध छ । डियर गुफाको प्रवेशद्वारबाट बाहिर प्रत्येक साँझ गुफाभित्रबाट लाखौं चमेराहरू निस्कँदारहेछन् । मैले घडी हेरैं, प्रत्येक १ मिनेटमा एउटा चमेराका समूह भित्रबाट बाहिर निस्कँदारहेछन् । उड्ने चमेराका डफ्फाहरू अनगिन्ती थिए । हामीलाई बाँडिएको जानकारीको कागजमा उल्लेख गरेअनुसार ३ लाखभन्दा बढी चमेराहरू त्यस ओढारमा बस्दछन् । त्यहाँ चमेराहरू मौरीको बथान उडेझैं उढ्दारहेछन् । जति साँझ पर्दै जान्छ त्यति नै ठू-ठूला



समूहमा चमेराहरू उड्दै बाहिर निस्कदारहेछन् । चमेराहरूको उड्ने प्रकृया अन्यत्रभन्दा विल्कूलै फरक र आकर्षक भएकाले मेरो ९ जनाको समूहलगायत सबैले झ्याप्पै अँध्यारो भइन्जेल चमेराहरू उडेको हेरिरहयौं । मुलू ओढार यात्राको मुख्य आकर्षणमध्ये यो चमेराहरूको क्रियाकलाप पनि एक थियो ।

अँध्यारोले छपक्क छोप्यो । बस आउने ठाउँ पुग्नुभन्दा केहीअघि सुश्री म्याडी बिरामी परिन् र बल्लतल्ल विस्तारैसँगसँगै हिँडाएर बस आउने ठाउँमा पुऱ्यायौं । बस चढ्यौं र रिजोर्टतर्फ हुइकियौं ।



शनिबार परेको हुनाले रिजोर्टमा निक्कै चहलपहल थियो । मानौं नेपालको चारकोसे जङ्गलको बीच भागमा यस्तै रिजोर्ट भएको भए कस्तो हुन्थ्यो होला ? मान्छे भेट्ने देख्नेको त के कुरा किराफट्याङ्ग्राको एकहोरो आवाजबाहेक केही छैन । अधारभूत सेवासुविधा उपलब्ध गराउन सक्ने राम्रा होटल रिजोर्टहरूका आधारमा १ स्टार, २ स्टार, ५ स्टारको स्तर कायम गरिन्छ । हो मुलू रिजोर्ट पनि राम्रोस्तरमध्येको पर्दछ ।



विदेश घुम्नुको मज्जा अपराधिक क्रियाकलापबाहेक अरू कामहरू विनासङ्कोच, विनालाज, स्वतन्त्र डुलघुम गर्नु पनि एक हो । कहिले उन्मादमा महङ्गा, अति राम्रा ठाउँहरूमा खाने, बस्ने गरिन्छ । तर यसपटक हामी कसैमा त्यो उन्माद आएन । हाम्रा गाइड डेन्नीले बताएमुताविक रिजोर्टको गेट नजिकैको सानो छाप्रोमा गयौं र टाइगर वियर पिउन अर्थात् हामी पल्टने भाषामा यस वियरलाई “बघिनीको दूध” पनि भन्दछौं । हामी सबै गफगाफमा ब्यस्त रहयौं ।

मैले यात्रापूर्व मुलू गुफा रोज्नुको कारण बोर्नियो टापुको बारेमा केही खोज गर्नु थियो। विश्वकै तेस्रो ठूलो टापु विशाल बोर्नियो टापुमा बसोबास गर्ने मानिसहरूको संस्कार, संस्कृति रहनसहन बुझ्न म लागिपरेको थिएँ । त्यस साँझ रिजोर्टमा स्थानीय लोकनृत्य प्रस्तुत हुँदैछ भन्ने जानकारी आयो तर बघिनीको दूध पिउँदापिउँदै अफसोच उता त्यो नृत्यको कार्यक्रम समाप्त भइसकेको थियो । समूहमा हिँड्दा साथीहरूको कुरा मान्नैपर्ने हुन्छ । धेरैजनामा बहुमतको कदर गर्नैपर्ने हुन्छ । हो, म त्यस दिन अल्पमतमा परें । "भोलि ती नृत्यहरू हेरौंला" भन्ने बहुमतको कदर गर्न बाध्य थिएँ । हुन त मान्छेको आ-आफ्नो जीउने शैली, चल्ने शैली हुन्छ ।

सबैलाई घुम्न र खानुमा सन्तोष भयो होला तर मेरो मन भने अलि खिन्न रहयो । बोर्नियो टापुको बारेमा बुझ्न कालिमान्तान जाने पटकपटक यात्रा तयारी गर्ने स्वयम् म तर त्यस दिन बोर्नियोकै अति महत्वपूर्ण ठाउँमा आएर हेर्ने, बुझ्ने सुनौलो अवसर गुमाउनु मेरो निम्ति दुःखको क्षण बन्यो । बेलुकी झण्डै १० बजेतिर हामी रिजोर्टको अर्को भागमा पुग्यौं, जहाँ बघिनीको दूध, अन्य पेयपदार्थ, टेलिभिजन, गीत गाउने (कारावके) ठाउँ र बसौंबसौं लाग्ने सुन्दर आरामदायी ठाउँहरू थिए । हाम्रो समूहबाहेक अन्य २, ४ वटा ग्रुप पनि थिए । कोही स्वीजर ल्यान्डका, कोही क्यानडियन र जापनिजहरू । हामी गोर्खालीहरूको चाँडै नै साथी बनाउन सक्ने मौलिक विशेषता छ । सायद हाम्रो परम्परागत नेपाली संस्कृति र मिलनसारपनले होला । त्यस पपमा काम गर्ने एउटा भाइ र अर्को बहिनी हामीसँग निक्कै हितैषी बने । हिन्दी गीतले जसरी नेपालमा प्रभाव पारेको छ, त्यसरी नै मलेसिया, ब्रुनाइ र इन्डोनेसियातिर पनि प्रभाव पारेको छ । हाम्रो समूहको प्रेम भाइ, रमेश भाइ हिन्दी पारखी हुन् । उनीहरूले हिन्दी गीत गाउँदा त्यहाँका सबै पाहुनाहरू दङ्ग परे र सँगै गीत गाए । उनीहरू खुब रमाए । रात निक्कै बितेको थियो यद्यपि वेटरहरूले हामीलाई सेवा पुऱ्याइरहे ।

बिहान म मेरो कोठामा सँगै बस्ने अङ्ग्रेज साथी ब्रससँग ब्रेकफास्टलाई बाटो लागें । सबै साथीहरू टेबलवरिपरि बसिसकेका थिए । हामी दुई पनि त्यही थपियौं । एजुकेसन स्टाफहरू सामान्यतः बटालियन तथा ग्यारिजनको शिक्षासम्बन्धी काममा सक्रिय हुनुपर्छ । अङ्ग्रेजी भाषा, कम्प्युटर शिक्षा, नेपाली भाषाको बारेमा छलफल चलिरहन्छ । त्यहाँ त्यो रन्को सुरु भइसकेको रहेछ । कुमार दाइले कुरैकुरामा कोलम्बियन पप गायिकाको नाम साकिरा भन्ने उच्चारण गर्नुभयो ।



आलेनले उच्चारण सुधारी दिनुभयो र बेलायतको केन्ट कलेजबाट पढाउन झिकाइएकी शिक्षिका सुश्री म्याडीले पनि थपिन् । तब कुमार दाइले पुरानो इतिहास कोट्याउँदै भन्नुभयो- केही वर्षअघिको कुरा हो एकजना अङ्ग्रेजले उच्चारण सिकाउँदा नेपाललाई नेप्पल सिकायो, त्यो नेपाली भाषा हो, हामीले नेप्पल सिक्ने होइन, तिमीहरूले चाहिँ नेपाल सिक्नुपर्छ । मैले भनेको साकिरा शब्द अङ्ग्रेजी भाषाको होइन् । त्यही देशको जनजिब्रोले बोल्ने शब्द हो । त्यसैले तिमीहरू दुबैको उच्चारण गलत हो । भाषा भनेको यस्तै हुन्छ । हामी तिमीहरूले जे उच्चारण गर्छौ त्यही अन्धाधुन्दै सिक्दैनौं ।

बोली रमाइलोकै क्रममा झण्डै अप्ठ्यारो परेजस्तो ती अङ्ग्रेज साथीहरू एकछिन चुप रहे, कारण अर्न्तमुखी स्वभावका कुमार दाइको तर्क सही थियो । भाषाको लागि अङ्ग्रेज साथीहरू सधैं सही हुन्छन् भन्ने सोच, अर्थात् हामीले उच्चारण गरेको सबै ठीक हुन्छ भन्ने सोच बोक्ने अङ्ग्रेज साथीहरूको लागि कुमार दाइको बोली, साँच्चैको गोली भएको छ । मेरो अलि पागल मनमस्तिकमा त्यो कुरा अझैं पनि झल्झली दोहोरिरहेको छ । सुत्नेबेला, फुर्सदको बेला र शिक्षासम्बन्धी चर्चाको बेला आर्थात् पटकपटक ।

## मानिस जसलाई बढी माया गर्छ उसैको हत्या गर्न पनि तयार हुन्छ ?

दोस्रो दिन हामी डेन्नीले दिएको समय १० बजे रिजोर्टको रिसेप्सनमा भेला भयौं र १५ मिटरजति तलतिर झऱ्यौं । त्यहाँ काठले बनेका लामा साँघुरा बोटहरू (माझीले तार्ने नाउ त्यसको पछाडिपट्टि पानी काट्ने मेसिन जोडिएको हुन्छ) रहेछ । आ-आफ्नो बोटमा ग्रुपग्रुप चढ्यौं र पानी बग्दै आएतर्फ उकालै उकालो बाटो लाग्यौं । बीच बाटोमै नाउ रोक्यौं र उत्रिएर त्यस इलाकाका भूमिपुत्र आदिवासी पेनान जाति बसोबास गर्ने लङहाउस (Long House) भित्र पस्यौं । नदीनजिकै रहेको त्यस लङहाउसमा स-साना स्थानीय चीजवस्तुहरू (Handicraft) नेपालको हाट बजारमा सुर्ती, चुरा आदि बिक्रीलाई राखेजस्तै राखिएका थिए । लङहाउस एकतलामाथि उठाइएको लामो घर हुँदोरहेछ । एउटा लङहाउसमा १५ देखि ४० घर परिवार बसोबास गर्दा रहेछन् । पेनान जातिहरू इबान्, ढुसुन, कार जानभन्दा खासै केही फरक हुदैनन् ।

साथीहरूले मन परेका चीजहरू किन्दै थिए । ८० वर्षीया बोज्यूले नाकले बाँसुरी फुकेको झल्यासै देखें र फेरि फुक्न अनुरोध गरें तर ती बोजूलाई पैसा दिनुपर्दो रहेछ । केही रिङ्गित (मलेसियन पैसा) दिएँ र नाकले बाँसुरी फुक्न लगाएँ । बोजूले खुसी हुँदै नाकले बाँसुरी बजाइन् । जुन मेरो लागि नौलो थियो । अझसम्म मैले कतै नाकले बाँसुरी बजाएको देखेको थिइन् । उक्त लङहाउसमा झण्डै १ घण्टाको घुमफिरपछि हामी अघि कै नाउमा फर्कियौ र फेरि उकालै उकालो लाग्यौं । नदीको पानी केही सुकेको, कतै हानिएको थियो । त्यसैले हामीलाई नाउ लैजान ठाउँठाउँमा निक्कै गाह्रो पर्‍यो । त्यो लङहाउसदेखि ५ कि० मि० मास्तिर भीरको फेदमा पुग्यौं । त्यहाँ भीरमा चढ्ने अत्यन्तै राम्रा खुटकिला पूरै फलामका बनाइएका थिए, जुन मलेसिया सरकारले ५ वर्षअघि अर्थात् २००१ मा बनाएको उल्लेख छ । उकालो



चढ्दै गयौं र एउटा गुफामा पुग्यौं । त्यस गुफाभित्र झिलिमिली बत्तीहरू बलेका थिए । घरको खम्बा, भित्ता कुँदिएझैं सुन्दर चट्टानहरूले बनेको त्यो ओढार आकर्षक थियो । मुलू केभ नाम सुन्दा एउटा मात्र हो कि जस्तो लाग्थ्यो तर त्यहाँ आ-आफ्नै नाम भएका विभिन्न गुफाहरू रहेछन् । ती गुफाहरू घुम्दा कतै सपिङ सेन्टर घुमेझैं लाग्थ्यो



भने कतै पारि गाउँ हिँड्दै काटेजस्तो लाग्थ्यो । गुफाहरूको यात्रा गर्नुअघि टर्च बोक्ने सल्लाह हुन्छ तर मैले भुसुक्कै बोक्न बिर्सिएको थिएँ । भाग्यवश गुफाभित्र पूरै बिजुली बत्तीको व्यवस्था थियो । हाम्रो गाइड डेन्नी भर्खरको युवा, ५ महिना अघिदेखि मात्र गाइडको काम गर्दै आएको रहेछ । उसले गाइडको पूरा काम नगरेजस्तै लाग्यो । त्यसैले ठाउँठाउँमा पुग्दा त्यस ठाउँको बारेमा भन्न सुझाव दियौं । त्यसपछि भने प्रत्येक ठाउँको बारेमा बताउँदै गयो उसले ।

हेलिकप्टरबाट देखिएपछि सन् १९६९ मा अङ्ग्रेजले पहिलोपटक ती गुफाहरू पत्ता लगाएको कुरा उनले बताए । अहिले त्यो इलाका विश्व सम्पदा सूचीमा पर्दछ । हजारौं वर्षअगाडि भू-कम्प आएको कारण ती गुफाहरू बनेको अनुमान गर्न सकिन्छ । त्योभन्दा अगाडि



ती इलाका समुद्र सतहमुनि थियो रे । जब दोस्रो ठूलो भू-कम्प आयो त्यसले झनै ठू-ठूलो गुफाहरू बनाएको रे । म बेलाबेला रमाइलो बोल्न मनपराउने मान्छे । अवसर मिल्यो, मैले प्रश्न गरें, "डेन्नी २ वटा ठू-ठूला भू-कम्पले यत्रा विशाल गुफाहरू बने अब तेस्रो भू-कम्प आयो भने यी गुफाहरू कत्रा बन्लान ?" उसले जवाफ दियो,

"सबै गुफा छोपिने छन् ।" तर मनमनै लाग्यो उसको देशको यत्रो सम्पत्तिमा मैले किन चासो राखूँ । उसको अलिकति भए पनि मन दुख्लाजस्तो लाग्यो त्यसैले मैले सान्त्वना दिँदै भने, "होइन, तेस्रो भू-कम्पले झनै ठूलो बनाउनेछ ।" ऊ हाँस्यो ।

हामीले भर्खरै बिङ गुफा घुमेका थियौं र बाहिर निस्कियौं । भीरमा बाटो राम्रो बनाइएको थियो । म ती विकास र प्रकृतिको अनौठो मेल देखेर रोमाञ्चक मोड्मा थिएँ । अक्सर घाम छल्ने ह्याट (टोपी) कमै लगाउँछु । केही समयअघि घाममा ह्याट लगाउँदा मख्खै थिएँ



तर गुफाभित्र पस्दा वास्तै भएन, बाहिर निस्केर अप्ठ्यारो बाटो हिँड्दै थिएँ, अचानक टाउको गजबले ठोक्कियो । एकछिन वरिपरिको सबै जङ्गल तोरीबारीझैँ पहेँलो देखेँ । तब बल्ल थाह भो' गुफा (Cave) घुम्न जाँदा ह्याट लगाउनु राम्रो होइन् ।

भीरको बाटो हिँडेर अलिपर पुगेपछि सानो पोखरी अर्थात् खोलाको शीरको डीलमा एउटा सुन्दर चौतारी थियो । केहीबेर आराम गरेपछि चौतारी भित्ताको सिधै उकालो २ सयवटा खुट्किला उक्लनुपर्ने गाइडले बतायो, हामी त्यसतर्फ लाग्यौं । हामी एउटा भव्य गुफाको



अगाडि पुगेछौं । त्यस गुफाको बाहिरी भागमा एउटा मात्र पात हुने झार थियो । गाइडको अनुसार त्यो झार त्यो ठाउँभन्दा अन्यत्र कतै पाइँदैन । गुफाभित्र पस्न २ सयवटा खुटकिलामाथि चढेजस्तै अर्कोपट्टि ओरालो झर्नुपर्दो रहेछ । मलाई लाग्यो त्यो संसारको एउटा अनौठो ठाउँ हो । हुन त त्यो संसारको सबैभन्दा लामो दुरी भएको गुफा हो । गुफा भित्रभित्रै एउटा नदी भन्न लायकको ठूलो सलल पानी बगेको छ । निक्कैबेर लगाएर धेरै परसम्म हामी गयौं । पहाडबाट झर्ने भोटेकोशी, तम्मर नदीजस्तै बगेको पानी छ । दिउँसोको १२ बजेको थियो तर त्यहाँभित्र भने अँध्यारो छिपिँदै गरेको रातझैँ थियो ।



उचाइ धेरै भएको यस गुफाभित्र धेरैमाथि कतैकतै प्वालहरू देखिन्थे । ती प्वालहरू रातका ताराजस्तै देखिन्थे र अलिअलि प्रकाश छिरेको भान हुन्थ्यो । धेरै भित्रीसम्म गएर त्यहाँको पवित्र पानीले हातमुख धोएर आ-आफ्नो तवरले पूजा गर्‍यौं । गाइडको अनुसार गुफाको ८ प्रतिशत लम्बाइसम्म मात्र हामी गयौं । त्योभन्दा अझ टाढा ५२ कि० मि० लम्बाइ भएको साँगुरो निश्पट अँध्यारो ठाउँतिर पानी बगेर गएको छ । हामी पर्यटक जान सक्ने अन्तिम ठाउँसम्म पुगेर फर्कियौं ।

गुफाको एक छेउबाट अर्को छेउ हेर्दा, अर्को गाउँझैँ देखिन्छ। गुफाभित्र धेरै ठाउँमा पानी झरिरहेका थिए। गुफाबाट निस्कँदा फर्किएर गुफालाई फेरि राम्रोसँग नियालेर हेरें । बाहिरी भागबाट गुफा हेर्दा हल्का कुहिरो लागेजस्तै देखिन्थ्यो । वास्तवमा त्यो गुफाभित्रबाट बग्ने नदीको पानीको बाफ हुनुपर्छ ।

सँगैका साथी आलेनले गुफाको बाहिरी भागमा समूहमा फोटो खिच्न अनुरोध गर्‍यो र उसले बिट्रिस झन्डा बोकेको रहेछ, त्यही झन्डा देखाएर फोटो खिच्ने काम भयो। हामीलाई "नखाउँ भने दिनभरिको शिकार, खाउँ भने कान्छा बाउको अनुहार" भनेझैँ भयो । नेपाली भूमिमा जन्मेकाले मुटुभरि माया नेपालको छ तर परिबन्दले बेलायतको नुन खानुको आफ्नै पीडा र बाध्यता त्यहाँ फेरि दोहोरियो । मैले नेपालको झन्डा बोकेको भए संसारकै दुर्लभ ठाउँमा प्यारो झन्डा बोकेर फोटो खिच्न पाउने थिएँ । मन एकतमासाले खेल्यो । मेरो देशको झन्डा सम्झिरहेँ र बाचा गरेँ अबदेखि जबजब विदेश घुम्न जान्छु नेपालको झन्डा सधैँ बोक्नेछु। सायद यो अनुभूति नेपाली मुटु भएका सबैको हुनुपर्छ ।



फेरि हामी त्यही २ सयवटा खुटकिला टेकेर तल ओर्लियौँ। दिउँसोको झण्डै साढे १ बजेको थियो । चौतारीमा दिउँसोको खाना तयारी राखिदिएका रहेछन् । गुफाभित्रबाट ठीक अर्कोपट्टि बाहिर रसिएर आएको पानीले बनेको सानो सुन्दर बुलबुले पोखरी अर्थात् खोलाको शिर छ। सफा पानी जम्मा भएको पोखरीमा निक्कैबेर पौडी खेल्यौँ र साँझ पर्नुपूर्व रिजोर्ट फर्कियौँ ।



रिजोर्ट साँच्चै नै रमाइलो छ । रमाइलो वातावरणमा पढ्न अर्कै मज्जा हुन्छ । अवसरलाई सदुपयोग गर्न म रिजोर्टको अर्को पाटा गएर पढ्दै थिएँ। त्यहाँबाट १५ मिटरनजिकै बगिरहेको मलिया नदी पौरखी देखेँ। नदीलाई छोप्न तम्सिएको सिधै अगाडिको ढुङ्गामा मेरो टाउको ठोक्किएलाझैँ लाग्यो। त्यो भीरलाई पनि भाग्यमानी देखेँ। वरिपरि जङ्गलमा कराइरहने किराफट्याङ्ग्राको आवाजलाई साङगीतिक रूपमा भेटेँ। मुलु रिजोर्टलाई शान्त स्वर्ग अनुभूत गरे ।

एउटी वेटर बहिनी केही खानुहुन्छ कि भन्दै अर्डर लिन आइन् । उनको नाम फिफी हो । "हिजोको साथीचाहिँ कहाँ छिन्" मैले उनलाई सोधे ? "उनले त कामबाट राजीनामा दिइन्" ती बहिनीले बोलिन्। मैले थपेँ, "किन ?" "किनकि ऊ यहाँको स्थानीय हो।" "स्थानीय मान्छेले काम गर्नु त झनै राम्रो होइन र ?" उनले उत्तर दिइन्, "म लावस भन्ने ठाउँबाट आएको, म पनि स्थानीय भए राजीनामा दिन्थे।" उसको उत्तर मलाई बुझ्न गाह्रो भयो। त्योभन्दा बढी सोध्ने साहस गरिनँ । म सांस्कृतिक नाचको व्यग्र प्रतीक्षामा थिएँ। मैले उनलाई सोधेँ, "बेलुकी नृत्य हुन्छ हैन ?" "उनले हुदैन" भनी टाउको हल्लाइन् । म झसङ्ग भएँ । अघिल्लो साँझ कार्यक्रम हेर्न छुट्टाएकोमा पश्चाताप लाग्यो। बिस्तारै मेरो कुरा फिफीलाई दर्शाएँ, साँझ पर्‍यो। सौभाग्यवश उनीहरूले हाम्रो रुचिलाई नकार्न सकेनन्, त्यस प्रकारको लोकनृत्य हप्तामा २ पटक मात्र देखाइँदो रहेछ । उनीहरू पर्यटकलाई पाहुना मान्छन् र पाहुनालाई कुनैकुराको कमी हुन नदिनु उनीहरू आफ्नो परम कर्तव्य ठान्छन्। हाम्रो अनुरोधलाई स्वीकार गर्दै बेलुकी लोकनृत्य



देखाए । खुब रमाइलो भयो । लोकनृत्यको समाप्तिपछि एक हुल साथीहरूले कहिले नेपाली दोहोरी, कहिले अङ्ग्रेजीमा, कहिले हिन्दीमा र कहिले मले भाषामा गीत गाउन सुरु गरिसकेका थिए । म, कुमार दाइ र रामप्रसाद दाइ स्विमिङ पुलको नजिकै बसेर गफ गर्दै थियौं ।

आफ्नो देश नेपालको पर्यटकीय विकासको बारेमा खुब बहस चल्यो । नेपालको पर्यटनसम्बन्धी नयाँनयाँ र नौलो अवधारणा ल्याउनुहुने कुमार दाइलाई बोलिमज्जाको कै क्रममा एकछिन पर्यटनमन्त्री पनि बनाइयो । साँच्चै नै देशविदेश पर्यटकको रूपमा घुमेका, अन्य देशका पर्यटकीय संस्कार संस्कृतिलाई राम्ररी बुझेका मान्छे नेपालको पर्यटनमन्त्री हुनुपर्छ भन्ने हाम्रो ठहर भयो । त्यतिकैमा हामो गफले मोड लियो र फेरि मले भाषासम्बन्धी विषयमा केन्द्रित रहयो । कुमार दाइ निक्कै राम्रो मले भाषा बोल्नुहुन्छ । वहाँ एकताका मले भाषाका अनुवादक अर्थात् इन्टरपिटर, वहाँले बोल्ने मले भाषाको परीक्षण गर्ने निधो भयो । हामीलाई वेटरको रूपमा सेवा गरिरहेकी झण्डै सोह्र, सत्र वर्षकी लज्जालु स्वभावकी, सेतो सर्ट लगाएकी, अनुहार र ज्यान मिलेको र लुगाले साह्रै सुहाएकी मरिसा थिइन् । लौ दाइ तपाइले मले भाषामै भन्नुपऱ्यो- त्यो डल्ला सुन्तलाहरूको फ्रेस जुस बनाएर मरिसा तिमी आफैले खाऊ । यदि उनले त्यो जुस बनाएर हामीलाई दियो भनेचाहिँ तपाइँ फेल । त्यहाँ बाजी नै पऱ्यो । दाइले निक्कै राम्रो भूमिका बाँधेर मरिसालाई भन्नुभयो । उनले टाउको हल्लाएर हुन्छ भनी । अब हामी उनले के गर्छिन् भन्ने पर्खाइमा थियौं । कुमार दाइ ढुक्क देखिन्थ्यो । अरू गफहरू पनि चल्दै थियो । वेटर मरिसाले केही समय लगाएर बनाएको फ्रेस जुस सरासर ल्याएर कुमार दाइलाई टक्राइदियो । हामी बेस्सरी हाँस्यौं । मरिसालाई पिउन आग्रह गऱ्यौं उनी छक्क परिन् । त्यहाँ हाँसो निक्कैबेर गुञ्जिरहयो । प्रसङ्गवश चुरोटको सम्बन्धमा पनि चर्चा चल्यो । दाइ तपाइँले धुम्रपान सेवन गरेको भाउज्यूले देख्नु भयो भने त कराउनु हुन्छ होला हैन ? “तर म कहिल्यै लिन्न” राम दाइले भन्नु 'भो । त्यो पीर मलाई पनि छ, यद्यपि साझपख बेलाबखत लिनेगर्छु । दाइहरूको अगाडि अलि अप्ठ्यारो मानीमानी अनुमति मागेर सिगरेट सल्काएँ । त्यो देखेर रामदाइले ब्यङ्ग्य गर्दै भन्नुभयो- विश्वास भाइ, बहिनीलाई त थाह छैनहोला तर यस्तै हो; संसारमा सबैभन्दा बढी आफ्नै नजिकको मान्छेलाई ढाँटिन्छ । वहाँ, दाइ क्या दार्शनिक कुरा ठट्यौली पारामा भन्छु र वास्तवमा म त्यो भनाइबाट प्रभावित भए । अरू यस्ता दर्शनको कुरा केही छन् भने अझ भन्नुहोस् भनी आग्रह गर्छु । त्यसो भए लौ सुन्नुस्, मानिसले जसलाई बढी माया गर्छ उसैको हत्या गर्न पनि तयार हुन्छ । म त्यो दुवै भनाइलाई आफ्नै ढङ्गबाट मूल्याङ्कन गर्छु । भनिन्छ, माया संसारको सबैभन्दा शक्तिवान वस्तु हो । मायाले संसारको कुनै पनि कार्यलाई सम्भव बनाउँछ । अर्को सामिप्य संवेग जति प्रेमीप्रेमिकामा हुन्छ अन्ततः आवेग पनि आउनेगर्छ । त्यसैले त मानिसले हत्या हिंसा गरिरहेका हुन्छन् । ढाँट्ने सवालमा चाहिँ; आफ्नै मान्छे भनेको श्रीमान् श्रीमती आपसमा समझदारी र सावधानी चाहिन्छ । त्यसो गर्दा बेलामौकामा



केही ढाँट्नै पऱ्यो । अर्को कुरा जीवनमा सबैभन्दा धेरैसमय सँगै बस्ने साथीलाई थोरै ढाँटे पनि लामो समयको जोड्दा धेरै हुन्छ । म त्यो हिसाब गरी चित्त बुझाउँछु ।

हाम्रो नजिकै गुञ्जिरहेको दोहोरीले हामीलाई बोलाइरहेकोले हामी त्यहाँ गयौं । त्यसदिन अरू थिएनन्, यद्यपि निक्कै रमाइलोसँग बस्यौं र रातको अबेर आ-आफ्नो कोठातर्फ लाग्यौं ।

तेस्रो बिहान हामी कायकिङ (प्लास्टिकले बनेको नाउजस्तै पानी खेल्ने) रिजोर्टकै नजिकबाट सुरु गऱ्यौं । नदीभित्र काठ, मुढाहरूको प्रसस्तै अप्ठ्यारा र खतराहरू थिए । माछाहरू पनि त्यतिकै मात्रामा थिए । सुश्री म्याडी र प्रेम कायकिङ गर्दागर्दै बोटबाट पल्टिए पानीमा खसे । विचरी ! म्याडी बेस्सरी अत्तालिन् । उसको हातमा चोट पनि लाग्यो । हामी गएर उनीहरूलाई उद्धार गऱ्यौं । झण्डै १० कि० मि० कायकिङ समाप्तिपछि रिजोर्टबाट दिउँसो ३ बजे एयरपोर्टतर्फ लाग्यौं । एयरपोर्ट निक्कै रमाइलो देखिएको थियो । नजिकैको २ वटा पहाड साँच्चै नै खुसी देखिन्थे । हामी ३.१५ मा त्यहाँबाट मिरी एयरपोर्टतर्फ उड्यौं । जमिनमा अलिअलि बादल देखिन्थ्यो । अकस्मात जहाज १५, २० फिट जति तल झऱ्यो, निरन्तर ३ पटकसम्म जहाज भुइतर्फ झऱ्यो । म अत्तालिएँ तर चुप बसेँ । त्यस आपतको बेला यो पापी मनले केके सोच्यो केके, सम्झन्छु अहिले पनि हाँसो उठ्छ, लाज लाग्छ ।

धन्यवाद, ब्रुनाई इमिग्रेसन, मलेसिया इमिग्रेसन, मिरी एयरपोर्ट, मुलू एयरपोर्ट र संलग्न साथीहरू सबैसबैलाई सम्झना सधैं रहिरहोस्, रहिरहोस् अनन्तसम्म ।

धन्यवाद ।

*७ अगस्ट २००६*
*टुकरलाइन सेरिया, ब्रुनाई*

शीर्षक
६

# देश बोक्नुको पीडा



***भाग्य सबैलाई कहाँ पुग्छर...*** बोलको गीत सधैं मेरो कानमा गुञ्जिरहन्छ । मेरो मनमा घन्किरहन्छ । साँच्चै नै हेर्दाहेर्दै सँगैका



कतिपय साथीहरू कहाँकहाँ पुग्छन् विश्वास नै नलाग्ने गरी प्रगतिका शिखर उक्लिरहेका छन्। हेर्दाहेर्दै सँगैका कतिपय साथीहरू प्रगतिको ठीक उल्टो अभागी बनेका छन् । कसैले शरीरका अङ्गप्रत्यङ्ग गुमाएका छन्, कसैले मानसिक सन्तुलन गुमाएका छन् । मलाई याद छ, त्यो विश्वास नै गर्न नसकिने गरी प्रगति गर्ने मजस्तै एउटा मान्छे हो र प्रगति गर्न चाहेर पनि जहिँकोतहिँ अझ त्योभन्दा तल्लोस्तरमा पुग्ने पनि मजस्तै साधारण मान्छे। समग्रमा हामी सबै विवेकशील प्राणी हौं । आखिर किन तल र माथि भइरहेछ ? त्यसैले मलाई लाग्छ यो सृष्टि स्वयम्ले गल्ती गरेको छ त्यसैले त हामीलाई अन्याय सहन बाध्य बनाउन ऊ लाचार छ ।

मान्छेले धेरै सम्पत्ति कमाउनु, सुखसयलमा जीवन बिताउनु मात्र सबथोक होइन रहेछ। भोकै पेट भए पनि आत्मा स्वाभिमान र सधैं शिर ठाडो राख्न आत्मा गौरव चाहिन्छ। यद्यपि बाध्यता भन्ने एउटा यस्तो शक्ति छ जसले प्रत्येक आत्मा स्वाभिमानदेखि राष्ट्रिय स्वाभिमानलाई समेत निरीह बनाई डोऱ्याइदिन सक्छ ।

सङ्गत गुनाको फल भनेझैं नेपालको बाह्य सम्बन्धलाई इतिहासदेखि हेर्ने हो भने पूँजीपति, साम्राज्यवादी शक्तिहरूसँग नजिक भएको देखिन्छ। कविको सङ्गतमा लागे कवि नै भइन्छ भनेझैं नेपाल पनि पूँजीपतिहरूको सङ्गतले गर्दा देशको समग्र आयस्रोतको तुलनामा नेपालीहरूको जीवनस्तर राम्रै रहेको भान हुन्छ । किनकि विश्वमा धेरै देशहरू छन् जो बाह्य चासो र सम्बन्ध खासै राख्दैनन् र उनीहरूको जीवनस्तर आफ्नै ठाउँमा सीमित छ । आपदविपदको बेला छरछिमेक, चिनारुहरूमा हारगुहार गर्नु स्वाभाविक हो । भोकाएको मान्छेले भोक लाग्यो भन्नु स्वाभाविक हो । यद्यपि कालान्तरमा नेपाल एउटा चौबाटोको देउरालीजस्तै बनेको छ । जहाँ बाटो हिँड्ने बटुवा आफैले देउरालीमा पाती नचढाएमा स्वयम् उसलाई आत्मा सन्तुष्टि नहूनेजस्तो अवस्था भएको छ। इतिहासको सशक्त कम्युनिस्ट रसियाले विश्वका गरिब देशहरूलाई काखी च्याप्दाच्याप्दै स्वयम् ऊ आफै गरिब भई डङ्ग्रङै ढलेझैं हारगुहार

माग्दामाग्दै नेपाल पनि अब त बाटोमा बसेर मागेरै जीवन गुजारा गर्नेजस्तै पूर्ण भिखारी बन्दै गएको आभास हुन्छ। भन्नुको तात्पर्य पूजीपति अमेरिकालेजस्तै धनी देश र अकूत आयस्रोतको ठाउँमा मात्र चासो राख्नुलाई राम्रो भन्न खोजेको चाहिँ अवश्य होइन । समयको गति र आवश्यकताबीच समन्वय सन्तुलन कायम गर्नभने अति आवश्यक हुन्छ ।

भन्छन्, आमाको बढी महत्व त्यसलाई हुन्छ जसले आमा गुमाएको हुन्छ। देशको माया उसलाई हुन्छ जसले देश गुमाएको हुन्छ। जजसले आमा र देश गुमाएका छैनन् उनीहरूले पनि महसुस गर्नुपर्‍यो । महत्व बुझ्नुपर्‍यो । एकजना महान् व्यक्तिले भनेझैं राष्ट्र र राष्ट्रियता प्राणभन्दा प्यारो हुन्छ। हो त्यो सबैभन्दा प्यारो चीज राख्न हामी सबैलाई दायित्व बोध हुनुपर्‍यो ।

केही वर्षअघिको कुरा हो । दक्षिण अमेरिकी राज्य बेलिजबाट लामो योजना र विशाल सपनाहरू बुनेर हामी मेक्सिकोको पर्यटकीय सहर काङकुङतर्फ छुट्टी मनाउन बाटो लाग्यौं। हामी ८ जनाको समूह थियौं। मेची पुलको वारि नेपाल र पारि भारतको इमिग्रेसन भएजस्तै पुलवारि बेलिजको इमिग्रेसनबाट पास भएर हामी पारि मेक्सिकोको इमिग्रेसन पुग्यौं । त्यहाँका पुलिसले यात्रुहरू सबैका पासपोर्ट हेर्‍यो । त्यसपछि हामीलाई इमिग्रेसनको अफिसतर्फ लग्यो । मलाई लागेको थियो, उसले हामीलाई सहयोग गर्दैछ। त्यो मान्छे एसियनजस्तै कालो कपाल भएको, छोटै कदका अलि मोटो थियो । मलाई उसको उपस्थितिले खासै प्रभाव पारेन तर उसले भन्यो "यु गट ग्रिन पासपोर्ट, सो द्याट नट एलाउट टु इन्ट्रि मेक्सिको।" अर्थात् हरियो पासपोर्ट भएको कारणले मेक्सिको जान नपाउने उसको आदेशले हामी छाँगाबाट खसेझैं भयौं। हामीसँगै चढेको बसमा सँगै काम गर्ने ब्रिट्रिस साथीहरू र केही अमेरिकनलगायत थुप्रै यात्रुहरू थिए। बसको सिटमा सँगै बसेकी खैरो कपाल भएकी अमेरिकी लिसा पनि काङकुङ नै लागेकी थिइन्। फर्साइली लिसा यात्राकै क्रममा निक्कै हितैषी बनिसकेकी थिइन् । उनीसँग अमेरिकी पासपोर्ट भएकोले बसबाट ओर्लनु परेन । एकैछिनमा फर्कन्छु भनी म उनीसँग विदा भएर इमिग्रेसनतर्फ लागेको थिएँ। अफसोच फेरि उनीसँग मेरो कहिल्यै भेट भएन। बसमा सँगै यात्रा गरिरहेका अन्य देशका साथीहरू बिनारोकतोक काङकुङतर्फ लागे तर हामी भने ङिच्च पर्दै फर्कियौं। त्यो घट्नालाई गरिब देश



हुनुको एउटा सानो असरको रूपमा सम्झेको छु । मैले त्यो घट्नालाई मेरो जीवनको एक अविस्मरणीय क्षणको रूपमा लिएको छु ।

झण्डै एकदशक अघिको कुरा हो । अस्ट्रेलियादेखि पूर्वमा रहेको फिजी राज्यको पर्यटकीय सहर नादीको एक भव्य होटलमा पस्यौं । त्यहाँ जापानीहरूको निक्कै ठूलो हूल थियो। हामीलाई कहाँबाट आउनुभएको भनी सोधे र मैले नेपालबाट भनी जवाफ दिएँ । उनीहरूले सबै ठाउँ रिजर्भ भइसकेको बहनामा बाहिर जान भने । मेरो साथीसँग उनीहरूको कानेखुसी चल्यो । साथीले आफ्नो नोकरीको परिचयपत्र देखाउँदै थियो । त्यसपछि उनीहरूले सर भनी सेवाका लागि आग्रह गरे ।

विशेषतः एयरपोर्टका इमिग्रेसनहरूमा पासपोर्ट जाँच गर्ने ठाउँहरूमा नेपाली पासपोर्ट बोक्नेहरूलाई दोस्रो दर्जाको रूपमा व्यवहार गर्ने गरेको पाइन्छ। मेरो आफ्नै अनुभवमा चाहिँ दुवई, लन्डन, कोलालम्पुरलगायत भारत र बङ्गलादेशका एयरपोर्टमा समेत कडाइ गर्ने गर्छन् । कुनै कुरामा पनि हामीलाई सजिलै पत्याउदैनन् । यी समस्या बेहोर्न बाध्य हुनुमा मुख्य दुई कुराहरू छन्। १. देश गरिब, निर्धो र भिखारी हुनु। २. नेपालीहरूसँग हरियो कलरको पासपोर्ट हुनु। अन्तर्राष्ट्रिय मापदण्डअनुसार पनि हरियो रङको पासपोर्ट सबैभन्दा तल्लो स्तरको मानिन्छ ।

पुरानो भाषामा भन्नुपर्दा म स्वयम् बाध्य भई गुलामी नोकरी गर्न आएको मान्छे। शिक्षा हाम्रो आ-आफ्नै ठाउँमा छ तर देशविदेश यात्रा र दीक्षा भने केही भयो होला भन्नु लजाउनु हुँदैन। नामर्द जोई हुनुभन्दा मर्दको रखौटी हुनु राम्रो भन्ने नेपाली उखानझैं आजसम्म सबैभन्दा धेरै औपनिवेश चलाउने ब्रिट्रिस साम्राज्यको नोकरी गर्ने क्रममा धेरै देशका सेना, प्रहरी र जनताहरूसँग उठबस हुनेगर्छ। बहादुर गोर्खालीको बारे उनीहरूलाई थाह हुन्छ र हामीसँग राम्रो व्यवहार गर्छन् तर जब नेपाली हो भनी थाहा पाउछन् तब गरिब देश भनेर कुरा काट्न थाल्छन् र त्यस्तै व्यवहार गर्न सुरु गर्छन् ।

केही महिनाअघिको कुरा हो। सर्बिया कोसभोको राजधानी प्रिस्तिनामा हामीसँगै काम गर्ने पोर्चुगिजले उनीहरूको पार्टीमा निमन्त्रणा गरे र म एकजना साथीसँग त्यहाँ गएँ। एकदमै राम्रो सत्कार गरे। खानुपिउनुको साथसाथै गफगाफ अघि

बढ्दै थियो । एकजना पोर्चुगिजले भ्याट्ट प्रश्न गऱ्यो, "तँ नेपाली त नेपाली सेनामा भर्ती हुनुपर्ने किन र कसरी ब्रिट्रिस आर्मीमा भर्ती भइस् ?" मेरो टाउको अलि फुलेजस्तो भयो । हत्तपत्त मैले भनैं, "यसरी तिमीहरूजस्ता राम्रा मान्छेहरूसँग भेटघाट हुन्छ त्यसैले ।" फेरि उसले सोध्यो, "नेपाल गरिब देश हुनुको कारण के हो ?" अझ उसले थप्यो, "नेपालको राजपरिवार साँच्चै नै युवराज आफैले मारेको हो ?" मलाई उसको सामुन्ने बस्न साह्रै अप्ठ्यारो लाग्यो । झट्टै कतै जाउँजस्तो लाग्यो तर निहुँ केही पाइनँ । "सरीसरी, आइमिन नाइस् क्वेसन्स्" भन्दै थियो । अङ्ग्रेजी स्पष्ट बोल्न नजान्नेहरू यसरी नै ठाडो प्रश्न गर्ने गर्छन् । मिलाएर प्रश्न सोध्न उसलाई आउदैनथ्यो । प्रश्न सिधै सोधेछु भन्ने उसलाई महसुस भएछ क्यारे माफ माग्दै नराम्रो भनेको चाहिँ होइन भन्दै थियो ।

हामी नेपालीहरू गोर्खाली नामले बेलायती सेनामा भर्ती भए पनि नेपालको विशेष दिनहरू जस्तैः प्रजातन्त्र दिवस, चाडपर्व, नयाँवर्षका दिन हामी नेपाली झन्डा राखेर कार्यक्रम गर्छौं । बेलायती सेनामै रहेर पनि नेपालको तर्फबाट अन्तर्राष्ट्रमा हुने विभिन्न खेलकुद प्रतियोगिताहरूमा सहभागी बन्छौं । त्यहाँ नेपालको झन्डा राखिएको हुन्छ । हाम्रो आत्मसम्मान र आत्मगौरव नेपाली हुनमा हुन्छ । त्यसैले हामी जहाँ रहे पनि देशकै लागि केही सोचिरहेका हुन्छौं । केही गरिरहेका हुन्छौं । नेपाल रहँदा भारत, पाकिस्तान, चीन, बङ्गलादेश पराइ लाग्छ तर जब हामी युरोप, अमेरिका, अफ्रिका पुगेको बेला कुनै पनि छिमेकी देशका नागरिक भेट्छौं तब हामीलाई चीज लाग्छ र खुसी हुन्छौं । एसियन रगत हामीलाई सबैभन्दा नजिक लाग्छ ।

बेलाबखत गोर्खा भर्ती बन्दको चर्चा सुन्न पाइन्छ । चर्चा र चिन्तन आफ्नै ठाउँमा जायज होलान् तर देशको भयावह बेरोजगारी समस्या साथै विदेशमा काम गर्न जाने बाध्यात्मक प्रथा र त्यहाँ नेपालीहरूले सामना गर्ने समस्याहरूको हिसाबकिताब गर्ने हो भने गोर्खा भर्तीको सवाल स्वतः गौण बन्न जान्छ । आज अरब मुलुकलगायत विश्वका विभिन्न देशमा पुगेका हामी नेपालीहरूले यस्तै अथाह पीडा भोग्न बाध्य भएका छौं । त्यसको मुख्य कारण देश गरिब हुनु नै हो । बाच्छोलाई साँढेले, गरिबलाई धनीले, निर्धोलाई बलियोले हेप्ने दुःख दिने संस्कार अझ भनौं त्यो त प्रकृतिको नियम नै हो । लाखौंलाख नेपालीहरू विदेश गएर गरिब देशको नागरिक हुनुको पीडा भोगिरहेका छन् । जाने र फर्कनेक्रम चलिरहेको छ, चलिरहनेछ ।



जसले पीडाको महसुस गरेर फर्केका छन् उनीहरूले पक्कै नै देश समुन्नत बनाउने बाचा गरेको हुनुपर्छ । अरू देशका संस्कार संस्कृति थोरै भए पनि अनुभव गरेर फर्केका हुन्छन् । त्यसैले अब हामी सबै मिलेर हाम्रो ज्ञान, सीप, अनुभव र अनुभूतिलाई देश बनाउनमा खर्च गर्नुपर्छ ।

एकले थुकी सुकी, हजारले थुकी नदी भनेझैं हामी सबै मिलेर राष्ट्र निर्माण अभियानमा जुटौं । देश विकसित हुनुको लागि प्रहरीको अनुशासन चाहिँदो रहेछ र देश शक्तिशाली बन्नको लागि देशको सेनालाई शक्तिशाली बनाउनुपर्दो रहेछ । त्यसैले यी दुवैमा सन्तुलन कायम गर्दै संसारलाई सुन्दर चश्माले हेरौं । आर्थिक उन्नतिका लागि निर्विकल्प उद्योगधन्दालाई आत्मासाथ गर्दै अघि बढौं । हत्याहिंसा सधैंसधैंलाई त्यागौं । घडीको प्रत्येक पललाई ख्याल राख्दै अब समयमै अघि बढ्न सक्यौं भने विशेषतः विदेशमा भोग्नुपर्ने अवहेलना, हेपाइ, शोषणलगायत बेइज्वतीको पीडा एकदिन अवश्य हट्नेछ म निर्क्योल गर्छु ।

*१५ अगस्ट २००७*
*कोसभो, सिलिम लाइन*

शीर्षक
८

# राम्रो सपना देखेको रात




अघि राती चकमन्न जून लागेको थियो। कामको व्यस्तताले कुन महिना गते, वार वास्तै छैन। आकासमा चन्द्रमा पूर्ण आकारको छ। सम्भवतः पूर्णिमाको दिन हुनुपर्छ । यो चन्द्रमाको प्रकाशले चण्डीपूर्णिमाको उत्सव बाँडेको हुनुपर्छ म अनुमान गर्छु । पूर्वी अफ्रिकी मुलुक



केन्याको जङ्गलमा पसेर २५ दिनपछि एक व्यवस्थित ठाउँमा सबैजना भेला भएका छौँ । जङ्गलमा सुत्न नपाएको, पानी पिउन नपाएको दुःखका कुराहरू गर्दागर्दै मध्यरात हुन्छ । जबजब पूर्णआकारको चन्द्रमा आकाशमा देख्छु म सधैँ मेरी प्यारीलाई सम्झन्छु र विगतसम्म पुग्छु । लाग्छ विगतलाई सम्झेर दुख्नु पनि साह्रै मज्जा आउँछ । हो त्यही मेरो घरको आँगन, सिखुवा अनि चन्द्रमाको सुमधुर प्रकाश मेरो मनभरि लागिरहेको छ । सोच्छु चन्द्रमाले छर्ने मधुर प्रकाशमा अर्थात् पूर्णिमाको दिन सबैभन्दा बढी म रमाउने गर्छु । मेरो विगतको पन्नाहरूमा यही पल गाउँमा पीङ खेल्न गएको छु । मेला भर्न गएको छु । भोज भतेर गएको छु । मेरी प्रियसीलाई धेरै पटक भेटेको छु । त्यति मात्र कहाँ हुनु यही बेला पहेँलै झुलिरहेको गैरीखेत र डाँडाखेतमा धान काट्न गएको छु । यही बेला छिमेकी कहाँ आएका पाहुना सोल्टिनीसँग रातभर धान नाचेको छु । रातभर मायाप्रीर्तिको गफ गरेर बिताएको छु । त्यसैले पूर्णिमा मेरो लागि विशेष उत्सवको कोसेली लिएर सधैँ आउँछ । मलाई रोमाञ्चित बनाइराख्छ । चन्द्रमा उदाएको रातमा सधैँ सिधै मेरो ओछ्यानमा चन्द्रमाको प्रकाश आओस् र मेरो आँखाले चन्द्रमा हेर्दाहेर्दै निदाउन पाएँ हुन्थ्यो भन्ने अभिलाषा हुन्छ । साथीहरूसँग विदा भएर ओछ्यानतर्फ लाग्छु । चन्द्रमाले रमाएर प्रकाश बाँडेझैँ मेरो मन रमाइरहेको हुन्छ ।

केही समयअघिदेखि किन हो कुन्नि आयासै मेरो मानसपटल देशको राजनीतिक विकृति र अन्तर्राष्ट्रिय छविको सवालमा केन्द्रित भएको छ । भ्रष्ट र चेलीबेटी बेचविखन गर्ने सबैभन्दा ठूला अपराधी भन्ने ठहर छ । किनकि भ्रष्टाचारको कारण करोडौँ नेपालीहरूको जीवनस्तर तल छ । भारत, अरब मुलुकतिर लगेर नेपाली चेलीहरू बेचिएका कारण म विदेश जहाँजहाँ जान्छु । गरिब देशको नागरिक चेलीबेटी बेच्ने देशको नागरिक भनेर अपहेलित हुन्छु । तब आफ्नो अस्मिता र स्वाभिमान बेचिएको पाउँछु । शान्त र शालीन वातावरणमा पनि बेलाबेला मलाई एकदमै रिस उठ्छ अनि कसम खान्छु कुनै दिन हाम्रो देशलाई कसैले छिछि नभन्ने गरी विकास गर्नेछौँ ।

देश विकास गरी सुविधा लिनको लागि हामीले केही गुमाउनु पनि पर्छ। देशविदेशको प्रभाव ख्याल गर्नुपर्छ। हामीले प्रत्येक व्यक्तिको बाँच्न पाउने नैसर्गिक अधिकारको बचाउ गरिरहेका छौँ तर १, २ जनालाई बचाउनाले हामी करोडौं नेपालीको प्रतिष्ठा र आत्मसम्मानको अधिकार हनन् भएको यथार्थ बिर्सने गरेका छौँ। त्यसैले मनसायपूर्वक जघन्य अपराध गर्नेहरूलाई मृत्युदण्ड सजायको व्यवस्था गरिनुपर्छ भन्ने मेरो निर्क्यौल छ । एक जनालाई मृत्यदण्ड दिएर करोडौं नेपालीहरूलाई अनुसासित राख्न सकिन्छ । देश विकास हुन्छ भने त्यो नाफा घाटाको हिसाब गर्नैपर्छ भन्ने मेरो मान्यता छ। नेपालसँग भौगोलिक, आर्थिक, राजनैतिक, सामाजिक र बाह्य कुटनैतिकलगायत धार्मिक र सांस्कृतिक विविधता मिल्ने अरूअरू देशहरूमा जागिरकै दौडानमा भाग्यवश जब म पुग्छु । त्यहाँ नेपालको जस्तो पहाडी भू-भागमा के कति, कस्तो र कसरी विकास गरेको रहेछ ? कुन कुरा हामीले सिक्नु पर्ने हो आदि कुराहरू सधैंसधैं मनमा गुथ्ने गर्छु। यतिसम्म कि कहिलेकाहीँ देशको बारेमा यी अनेक प्रकारको सोच आउनुको सट्टा विगतका तीतामिठा क्षण दिमागमा आइदिए हुन्थ्योजस्तो लाग्छ ।

लाग्छ, मेरो मन एकप्रकारको चोर मन हो । अरूको विकास र प्रगतिको तरिका जसरी भए पनि सिकौंभैँ लाग्छ त्यो चोरी काम भएन र ? । यसपटकको यो केन्या यात्राको क्रममा एड्स रोगको नियन्त्रण कसरी गर्दैछन् त्यो जान्ने इच्छा छ। जुन हाम्रो देशमा पनि सुहाउँदिलो होला भन्ने लागेको छ । देशविदेश डुल्ने क्रममा भकुण्डोजस्तो गोलो पृथ्वीको सौभाग्यवश पूरै एक चक्कर लगाएभैँ लाग्छ। ती ३ दर्जन देशहरूको स्थिति केहीकेही अवलोकन गर्दा मलाई लाग्यो प्राकृतिक बनावट, मानिसको आचरण, स्वभाव, आवश्यकता र बानीब्यहाँरा प्रायः संसारमा उस्ताउस्तै हुँदारहेछन् । गरिब देश हुनुको मुख्य कारण भ्रष्टाचार रहेछ र समुन्नत देश बनाउन उद्योगधन्दाबाट उत्पादन गरी अरू देशहरूलाई बेच्नै पर्नेरहेछ । समाज समुदाय विकास हुनको लागि बसाइसराइ पनि महत्वपूर्ण रहेछ । बिर्सन नहुने अर्को कुराचाहिँ मानिस र मानिसको दिमाग हो किनकि एक व्यक्तिले गर्ने काम अर्को व्यक्तिले पनि गर्न सक्दछ। बेलाबखत जीवन र जगत्लाई सम्भँदा मलाई साह्रै अनौठो लाग्नेगर्छ । मनमा धेरै प्रश्न र प्रतिउत्तर आउँछ, जान्छ तर एउटा प्रश्न सधैं दोहोरिरहन्छ ।



आखिर सृष्टिले किन गल्ती गर्छ ? जो भोको पेट छ उही एड्स रोगबाट मर्नुपर्छ। ती गरिब दरिद्रले कुन पापको प्रायश्चित भोग्नु परेको हो ? आज दिउँसो मभन्दा जेठोपाको हर्कराज सा'ब र शिव कुमार सा'ब केन्याको रिफ्टभ्याली प्रोभिन्सको साम्बुरू जिल्लाको आर्चरपोस्ट नामक सानो सहरमा गएका थियौं। विश्वास तिम्रो नजिक रोगी नानीहरू छन् । डराउँदै शिवकुमार सा'बले साबधानी गराउनुभयो । वासोनिरो नदीको नजिकै बसेर एड्सको बारे छलफल गऱ्यौं । केन्यामा छ जनामध्ये २ जनालाई एच्० आई० भी० भएको हुन्छ भन्ने तथ्याङ्क छ। केही समय पछि हामी स्थानीयवासी डेभिडको घर गयौं । म बाहिर हाम्रो गाडीलाई रुँगेर बसेको थिएँ। एक अधबैंसे छोरी मान्छे हाम्रो नजिक आइन्। उनको आँखामा घाउ थियो । खालीखुट्टा थिइन् । थोत्रो एकसरो साम्बुरू जातीय पोसाक सुका लगाएकी थिइन्। जब उनी नजिक आइन् शिवकुमार सा'ब अलिटाढा भाग्नुभयो। हामीलाई ती आइमाई एड्स रोगी भएको जस्तो लाग्यो । अर्को एकजना अत्यन्तै दरिद्र खोर्सानी, गोलभेडा किनिदिन अनुरोध गर्दै मेरोनजिक आयो ह्वासह्वासी रक्सी गनाउँथ्यो। मलाई लाग्यो त्यो मान्छेलाई पनि एड्स लागेको छ। उसले आफ्नो मर्ने दिन पर्खेर बसेको छ। उनले आफू गरिब भएको जाहेरी गऱ्यो र सहयोगको याचना गऱ्यो ।

साँच्चै नै अहिले संसारमा दुई स्पष्ट वर्ग छुट्टिएको छ । एड्स पीडित वर्ग र एड्सरहित वर्ग । यो समस्या आधुनिक विज्ञानलाई ठूलो चुनैती मात्र होइन आधुनिक विज्ञानको लज्जास्पद पराजय पनि हो । गत सेप्टेम्वर २७ का दिन आर्चरपोस्ट निवासी एक स्वास्नीमान्छेले नजिकैको वासोनिरो नदीमा हाम्फालेर आत्महत्या गरिन् । हाम्फालेको ठाउँबाट भण्डै २ कि० मि० तल नदीको बीच भागमा अड्किएको अवस्थामा उनको शव भेटियो। बीच भागमा अड्किएको शव भिकिदिन त्यहाँका स्थानीयहरूले अनुरोध गऱ्यो र हाम्रा इन्जिनियरहरूको समूह बिहानै तम्सिएर, बाटो लागे र मैले पनि फोटो खिच्ने जिम्मेवारीका कारण त्यही समूहलाई पछ्याए। भण्डै बिहानको ८ बजेको थियो ठूलो नदीको बीच भागबाट त्यो शव ल्याउनको लागि इन्जिनियर समूहले पुलका टुक्राहरू जोड्दै लगाउदै मात्र थियो । बिहानीको कलिलो घाम न्यानो लागिरहेको थियो तर अकस्मात वासोनिरो नदीमा ह्वातै पानी बढेर आयो र त्यो लाशलाई पानीले विस्तारै छोप्यो र लाश केही नदेखिने भयो । मैले धेरैलाई सोध उनका बारेमा । ती आत्माहत्या गर्ने स्वास्नी मान्छेको भतिजोका अनुसार ती स्वास्नी मान्छेको नाम नातुकू हो र

उसको श्रीमान् केन्या आर्मीको कर्पोरल थियो । उसले राजधानी नाइरोवीमा अर्की केटीलाई विवाह गरे । त्यसपछि उसलाई एड्स लाग्यो । त्यसको कारण एक वर्षअघि मात्र उसको मृत्यु भएको थियो । श्रीमान्‌को क्रमशः धोका र वियोग, साथमा ४ वटी छोरीहरूको जिम्मेवारी पाएकी नातुकूलाई पनि जब एड्स भएको जानकारी भयो त्यसपछि उनी अर्धपागल भएकी थिइन् । उनकी कान्छी छोरीलाई पनि एच्० आई० भी० पोजेटिभ भएको छ ।

नदीको बीच भागमा रहेको ढुङ्गामा अडकिएको अवस्थामा शव छ । ढुङ्गाको दुवैतिर बाट पानी बढ्दै आयो र त्यो अड्किएको लाशलाई भेलले विस्तारै छोप्दै गयो । उनका २ वटी छोरी नदीको बगरमा बसेर रुँदै हेरिरहेका थिए । म उनीहरूको नजिक छु र उनीहरूलाई हेरिरहेको हुन्छु । मेरो मन अचानक भक्कानिन्छ र म अलि पर जान्छु त्यो पीडाबाट टाढा हुन । नदीको पूरै किनार धमिलो बाढीले टम्म ढाँक्छ । त्यो ढुङ्गाको कापमा अड्किएको लाश कहाँ हो देख्नै छोडियो । शव झिक्न गएका सैनिक इन्जिनियरहरूको केही सीप लागेन र त्यसदिन उनीहरू त्यतिकै फर्किए । म अनि सँगै गएको साथी पनि ती आइमाईले हाम्फालेको ठाउँमा हिँड्दै गएर हेऱ्यौँ र बासस्थान फर्कियौँ । मलाई लाग्यो भौगोलिक प्रतिकुलता गरिबीको मुख्य कारणमध्ये एक हो । किनकि त्यो नदीमा ठूलो भेल आइरहेको थियो र त्यहीनेर टन्टलापुर घाम पनि लागिरहेको थियो । यसरी थाहै नपाई आउने त्यो नदीको बाढीले धेरै गरिबका सन्तानहरू बगाइलगेका छन् र बगाइलानेछ ।

आर्चरपोस्ट बजार र त्यस गाउँ इलाकाका गरिब दुःखीहरूले त्यही नदीमा बगिरहेको धमिलो पानीको छेउ बगरे बालुवामा खाल्डो बनाई त्यहाँ रसाएर आएको धमिलो पानी नै पिउने गरेको मेरै आँखाले प्रत्यक्ष देखेँ । गरिब जीवन वास्तवमै अभिशाप लाग्यो । त्यस आर्चरपोस्ट इलाकामा स्थानीवासीहरूसँग राम्रो सम्बन्ध निर्माण गर्नको लागि हामीले साम्बुरू युथ लिग डेभलपमेन्ट फोरमको भवन बनाउदै थियौँ ।

नदीबीचबाट शव झिक्न नसकेको तेस्रो दिन बन्दै गरेको भवन निरीक्षण गर्न जाँदैगर्दा मैले इन्जिनियरका कमान्डर फ्राइलाई भेटेँ । उसले नदीबीच अड्किएको त्यो शव हिजो झिकेको कुरा बतायो । त्यसरी हाम्रै समूहका साथीहरूले शव झिकेर स्थाानीयवासीलाई आपत परेको बेला सहयोग गरेको खबरले मलाई धेरै खुसी बनायो । अहिले यी दुईचार कुरा लेखिरहँदा रातको साढे १ बजेको छ । केन्याको आर्चरपोस्ट इन्जिनियरिङ क्याम्पको खाली चौरीमा टाँगिएको पालभित्र टर्चको सहयोगमा मन पोलिरहने केही कुरालाई यसरी कागजमा उतार्दै छु- जब मनका कुराहरू



कागजमा राख्छु तब एकप्रकार शान्त महसुस गर्छु । हो त्यही आत्मा शान्तिको लागि सबै साथीहरू निदाएको मौकामा मचाहिँ जागिरहेको छु । मेरो यो मानसपटलमा अघि रातको सपना खेलिरहेको छ । मेरो विचारमा देश विकासको लागि राजनैतिक सवाल सबैभन्दा महत्वपूर्ण हुनेगर्दछ । जग बलियो भएमा घर सधैँ बलियो हुन्छ । सबैलाई समेट्ने गरी पारदर्शी रूपमा बनाइएको संविधान छ । एक आपसमा सहयोग र सद्भाव बराबर छ भने बनेको कार्यकारिणी सरकारप्रति सबैको सम्मान हुन्छ । त्यही सरकारको स्थिर राजनीतिको कारण देशको अर्थिक प्रगति बढ्नेगर्छ । मैले मेरो देशको लागि सधैँ यस्तै प्रगतिका सपना बुन्नेगर्छु । उद्योग चलाई सामान निकासी गर्ने र पर्यटक अत्यधिक ल्याउने चिन्ताले सधैँ पिरोलिने म आज साह्रै खुसी बनेको छु ।

मेरो गाउँको अलि तल खोल्याङनजिक खोल्साको डाँडामा विशाल होटल थियो । होटल भवन भिरालोमा भएकोले तलामाथि तलामुनि दुवैठाउँ निक्कै सफा र सुन्दर थियो । त्यो होटल मैले चिनेको असोक भन्नेको थियो । त्यहाँ काम गर्ने मेरो गाउँका भाइ, बहिनी, भतिजा गाउँका स्थानीयहरू नै थिए । एक हुल्ल पर्यटकहरू थिए । अलिपर खम्बारे गाउँनजिक गुफा थियो । उनीहरू त्यो होटलको बस चढेर त्यो गुफा घुम्न गए । एक ठाउँबाट छिरेर अर्को ठाउँमा निस्कने लामो गुफा हेरेर पर्यटकहरू मख्ख पर्दै खुसी साथ फर्कँदै थिए । पर्यटकीय आकर्षणको लागि विशाल ताल बनाउन ओखे खोलालाई पाटीगाउँ नजिक बाँधबाँध्ने योजना बनेको थियो । मलेसिया, थाइल्यान्ड जतिकै पर्यटकहरू मेरो गाउँमा पनि आउन थालेका थिए । त्यसै कारण म साह्रैसाह्रै खुसी भइरहेको थिएँ । केही समयअघि पल्लो टोल साक्फारामा बनेको किरात मन्दिरसम्म मोटरबाटो लाने योजना बनिसकेको थियो । त्यसैले म झनै रमाइरहेको थिएँ । थाहै नपाई बिहानको उज्यालो भएछ । म ब्युझिएँ तर ओछ्यानमै लडेर त्यही सपनामा देखेको योजनाको बारे थप सोचिरहेँ, सोचिरहेँ ।

मेरो देशको गाउँ र सहरलाई कसरी राम्रोसँग विकास गर्ने भन्ने पीर, चिन्ता सधैँ मलाई हुन्छ । त्यसैले होला अघि रातीको सपनाले मलाई औधी खुसी बनाएको छ । यतिलामो जीवनमा मैल यस प्रकारको सपना थोरै मात्र देखेको छु; त्यसमध्ये अघि राति देखेको सपना सबैभन्दा राम्रो सपना हो । त्यसको लागि मेरा यी आँखाहरूलाई धन्यवाद । धन्यवाद ती होटलका मालिकलाई । परिपञ्च धन्यवाद ती मेरा गाउँमा आउने पर्यटकहरूलगायत सहभागी सबैसबै पात्रहरूलाई ।

*राती १.३३ बजे, ४ नोभेम्बर, २००६,*
*आँचरपोस्ट इन्जिनियरिङ क्याम्पको खुल्लामैदान, केन्या*

शीर्षक
८

# बेलायतमा खुसीको सपिङ बेखुसीको सामान



हिजोआज बेलायतमा छ्यापछ्यापती नेपालीहरू भेटिन्छन् । ब्रिटिस सरकारले गोर्खालीहरूलाई स्थायी रूपमा बसोवास गर्न पाउने अनुमति दिएपछि बेलायतमा नेपालीहरूको सङ्ख्या ह्वात्तै बढेको हो । केही समयअघि गोर्खालीहरूले चलाउने ब्याङ्कलाई बेलाबखत गोर्खा ब्याङ्क भनेर बोलीमज्जा लिन्थे तर आजकल भने गोर्खाली टाउन, नेपाली टाउन भनेर सहरकै नाम बद्लिन थालेको छ ।



नेपालीहरूको घनाबस्ती बढ्दै गएको इलाकामा पुन टोल, सुब्बा टोल, धराने टोल, पोखरेली टोलजस्ता नामकरण हुन थालेको छ । यी नामहरू आधिकारिक भने भइसकेका छैनन् तर नेपालीहरूको बेलायतमा भएको उपस्थितिलाई भने स्पष्ट गर्दछ । यहाँका केही स्कुलहरूमा झण्डै ५० प्रतिशतभन्दा बढी गोर्खालीका नानीहरू अध्ययन गर्छन् ।



यहाँ नेपालीहरूलाई भेट्दा एकदमै खुसी लाग्थ्यो । चिनजानै नभए पनि नमस्कार गरी अभिवादन गरिन्थ्यो । लन्डनको व्यस्त सहरमा नेपालीजस्ता देखिने बित्तिकै फर्केर पटकपटक हेर्ने गरिन्थ्यो । त्यो मान्छे जापानिज, कोरियन, चाइनिज या त अरू कोही एसियन हुन्थे । नेपालीहरू कमै भेटिन्थे दश वर्षअघिको सम्झना गर्दै यी घट्ना बताउने नेपालीहरू निक्कै भेटिन्छन् । हिजोआज अभिवादनको त के कुरा नेपालीहरूबीच बोलचालसमेत हुँदैन ।

आधा दशकअघि एभरेस्ट रेडियो, खुकुरी एफ्० एम्० बेलाबखत सुन्न सकिन्थ्यो तर अहिले बेलायतको राजधानी लन्डनबाट नेपाली टी० भी० र ग्यालेक्सी टी० भी० २४ सै घण्टा प्रसारण हुन्छ । ब्रिटिस फोर्सेज गोरखा रेडियो (बी० एफ्० बी० एस्०) र गोर्खा

वेलफेयर सोसाइटीद्वारा सञ्चालित बी० जी० डब्ल्यू० एस्० एफ्० एम्० सुन्न सकिन्छ । त्यस्तैगरी साप्ताहिक नेपाली-पत्र र नेपाली सन्देश पत्रिका लन्डनबाट निरन्तर रूपमा प्रकाशन भइरहेको छ ।

नेपाली सङ्घसंस्थाहरूको सङ्ख्या अहिले झण्डै ४ दर्जन नाघिसकेको छ । नेपालीहरूको रेस्टुरेन्ट र पसलहरू त अनगिन्ती छन् । हिजो बेलायतबाट पैसा कमाएर नेपाल लैजाने चलन पनि ठीक उल्टो भएको छ। नेपालमा भएका सम्पत्ति बेचेर बेलायतमा बसोवास गर्न आउनेक्रम बढ्दो छ। यहाँ बेलाबेला नेपाल नै बेलायतमा सरेझैं भान हुन्छ । नेपालीहरूको आचरण र स्वभावसँगै विकृति विसङ्गतिलाई भने उल्लेख गर्न छुटाउनै हुन्न ।



बेलायतमा श्रमको सम्मान हुने भएकोले नेपालीहरू साधारणदेखि विशिष्ट तहसम्मका श्रम गर्ने गरेका छन् । बेलायती सेनामा भर्ती भएर आउने एउटा हूल, स्थायी बसोवासलाई अनुमति पाएका पूर्व गोर्खा सैनिकहरूको अर्को हूल, हङकङ बी० एन्० ओ० का हूल र शिक्षा तथा रोजगारीको लागि बेलायत आउनेहरूको बेग्लै हूल प्रतिदिन बढ्दो छ ।

बेलायतमा भित्रिएका नेपालीहरू प्रायः खुसी र सुखी नै देखिन्छन् यद्यपि देश गुमाउनुको पीडा, परिवार आफन्तदेखि टाढा रहनुको पीडाले सधैं सताइएका हुन्छन् । घरपरिवार, नातागोता र साथीभाइलाई



विदेशको चिनो घरदेश पठाउन खुसीमनले बेलायती सहरमा सपिङ गर्छन् र त्यो सामानसँगै बेखुसी भई घर फर्कन्छन् किनकि त्यो सपिङको वस्तुमा **मेड इन चाइना** लेखिएको हुन्छ । भनिन्छ विकसित मुलुकहरूमा आउने सामानहरूको गुणस्तर राम्रो हुन्छ । राम्रै दाम तिर्नुपर्छ यद्यपि चीनमा बनेको भन्नेवित्तिकै खासाकै सामानझैं लाग्छ र त्यो सामान घरदेश पार्सल पठाउन चाहदैनन् तर **मेड् इन चाइना**बाहेक अरू देशको सामान पनि बेलायतमा प्रायः पाइँदैन ।

*१७ जुन २००७*
*५९ मेकाइन्जि ड्राइभ, फोकस्टोन, बेलायत*

शीर्षक ८

# साम्बुरू जाति एक परिचय



पूर्वी अफ्रिकी मुलुक केन्याको उत्तरी भागमा पर्ने साम्बुरू जिल्लाको आर्चरपोस्ट इलाकामा आदिमकालदेखि बसोबास गर्दै आएका केन्याका ४२ जनजाति-हरूमध्येका एक साम्बुरू जाति हुन् । यी जाति घुम्रिपरेको कपाल भएका काला र अग्ला हुन्छन्। उनीहरू आफ्नै मातृभाषा साम्बुरू, देशको सम्पर्क भाषा सुहेली र अङ्ग्रेजी भाषा पनि बोल्दछन् । परापूर्व कुनै धर्म नमान्ने यी जातिहरूमा गत आधा शताब्दीमा रोमन क्याथोलिक धर्मको ठूलो प्रभाव परेको छ भने नगण्य मात्रामा मुस्लिम धर्म मान्नेहरू पनि छन् ।



झण्डै ४ लाख जनसङ्ख्या रहेका यी जातिहरू राज्यबाट धेरै उपेक्षित छन्। समतल र भित्रिमधेसजस्तो भू-भाग रहेको ठाउँमा बसोबास गर्ने यी जातिहरूको मुख्य पेशा गाईवस्तु, भेडाबाखा, उँट र गधा पालन गर्नु हो। यी जातिले परम्परादेखि नै सुँगुरचाहिँ पाल्दैनन्। उनीहरू काँचो दूध र जनावरको आलो रगत मिसाएर पिउँछन्। यी जातिहरू



केही दिन पानी नपिई पनि बस्न सक्छन्। प्रत्येक हप्ता ठाउँ सर्दै गाईबाखा चराउछन् । प्रायः परिवारको २, ३ सय गाईबाखाहरू हुन्छन्। जसको धेरै गाईवस्तु हुन्छ त्यही मान्छेलाई धनी मानिन्छ। यी जातिको चलनअनुसार छोरी मान्छेले घर बनाउछन् र छोरा मान्छेले पशुपालन गर्ने र सुरक्षा प्रदान गर्ने काम गर्छन्। केन्यामा पाइने जनावरहरूमध्ये जङ्गलमा बस्ने जङ्गली भैँसी अर्थात् अर्ना सबैभन्दा खतरनाक मानिन्छ। त्यसकारण केन्यामा भैँसीलाई घरमा पाल्ने गर्दैनन् ।

यी जातिको मौलिक विशेषता मोरान हो अर्थात् यसलाई अङ्ग्रेजीमा वारिएर पनि भनिन्छ । मोरानहरू जातीय सेना हुन् । उमेर १४

वर्षदेखि माथिकाले जङ्गलमा गएर जङ्गली जनावर मार्ने तालिम गर्छन् र उनीहरूको बहादुरीको आधारमा मोरानको मान्यता पाउछन् । यी जातिभित्र बूडापाकाहरूमा ठूलो अधिकार हुन्छ र उनीहरूलाई सम्मान पनि त्यतिनै गर्दछन् । मोरानहरूले गाउँको



सामूहिक रूपमा सुरक्षा गर्छन् । यी साम्बुरू जातिका मोरानहरू सधैँ शिरमा प्वाँखको श्रीपेजस्तै बनाएर मोरान पोसाक (ल्यासो) लगाउँछन् । यी जातिको मुख्य हतियार भाला अर्थात् पातलो फलामले बनेको दुबैतिर धार भएको सिधा हतियार हुन्छ; त्यसलाई लालिम भनिन्छ । लालिमलाई खुकुरीजस्तै भिर्छन् । लामालामा भाला चलाएर सिंह, हात्ती, अर्नाजस्ता जङ्गली जनावरहरू मार्छन् । जतिवटा खतरनाक जङ्गली जनावर माऱ्यो त्यतिवटै गाईको छालाले बनेको चुरा लगाउने अनुमति पाउँछन् । भनिन्छ, मोरानहरू तरुनी भएको घरमा पसेको बेला अरू मान्छेहरू त्यो घरमा पस्न मिल्दैन । साम्बुरू संस्कारअनुसार विवाहित छोरीमान्छेले घाँटीमा धेरै माला लगाउछन् । छोरा जन्माएका स्वास्नी मानिसले शिरमा लगाउने उनीहरूको गहनामा स्पष्टसँग चिनिने केही फरक प्रकारको



गहना लगाउँछन् । त्यस गहनालाई साय इन्क्वा भनिन्छ । छोरी मात्र जन्माएकाले उक्त गहना लगाउन पाउँदैनन् । विवाह गरेका लोग्ने मान्छेलेचाहिँ कानको माथिल्लो भागमा डोरीजस्तो देखिने छालाबाट बनेको गहना लगाउछन् । यी जातिका चलनअनुसार जब विवाह गर्छन् तब उसलाई मोरान भनिँदैन । मोरान अविवाहित केटाहरू मात्र हुन्छन् । गाउँमा चोरीडकैती, जङ्गली जनावरको आक्रमण भएको खण्डमा मोरानहरू हिम्मतका साथ लड्छन । उनीहरू बलिया र मूर्ख पनि हुन्छन् ।

साम्बुरू जातिहरूको जीवनस्तर निक्कै निम्न छ । यी जातिले मसाई, तुर्कना जातिसँग पनि कुटुम्बेरी गर्छन् । साम्बुरू जाति केन्याको साम्बुरू जिल्लामा मुख्य रूपमा बसोवास गर्छन् भने यी जातिको आफ्नै मौलिक केही नाचगानहरू छन् जसमध्ये गेरियो नाच तरुनीतन्नेरीले हात समाएर नाच्ने नाच हो भने समूहमा नाचिने नाचलाई डेमर नाच भनिन्छ । साम्बुरू जातिका लोग्ने मान्छेले प्रायः जसोले मिराक खान्छन् । मिराक एक प्रकारको लागूपदार्थ हो । यसले कोकिनले जस्तै मात दिन्छ । यो मिराक मेरू जातिले मात्र उत्पादन गर्दछ । यो मिराक खानाले ३ दिन ३ रात निन्द्रा नलाग्ने नसा लाग्दछ । चियाको बोटको कलिलो टुप्पो टोक्दाको जस्तै स्वाद हुने यो मिराक इथोपिया, युगान्डा, तान्जानिया, सोमालिया र सुडानमा पनि प्रचलनमा रहेको छ । यो मिराक खाने स्वास्नी मानिसको गर्भ नरहने, यौन क्षमतामा ह्रास आउनेजस्ता असर हुने भएकोले साम्बुरू संस्कृतिमा छोरी मान्छेले मिराक खादैनन् । उनीहरूले दैनिक खानाको रूपमा काँचो दूधलाई काँचो रगतसँग मिसाएर खान्छन साथै बोडीको परिकार मुख्य रूपमा खान्छन् । उनीहरू आफ्नै स्थानीय मादक पदार्थ वुसा र चाङा पिउछन् । वुसा बनाउने तरिका अलि फरक भए पनि यसलाई जाँडसँग दाँज्न सकिन्छ । चाङाचाहिँ रक्सीको जस्तो स्वादको हुन्छ । यी जाति वासो निरो नदी अर्थात् वासो निरोको अर्थ खैरो धमिलो पानी हुन्छ । त्यही वासो निरो नदीको नजिक बसोबास गर्छन् । सधैँ धमिलो पानी आउने यस नदीको छेवैको बलौटे बगरमा सानो खाल्डो बनाउँछन्

र रसिएर आउने त्यही पानीलाई नै यहाँका निम्न वर्गहरूले पिउँछन् ।

यस जाति बसोवास गर्ने इलाकामा जिराफ, उँट, जेब्राले खाने रुख विरुवाहरू प्रसस्त पाइन्छन् । ती रुख बिरुवाको अत्यन्त स-साना पात र पातभन्दा लामालामा काँडा हुने मझौला आकारको रुख हुन्छन् । यी जातिहरू खासै खेतीपाती गर्दैनन् । घुमन्ते गोठाला गर्छन् र आफ्नैपनमा रमाउछन् ।

साम्बुरु जातिले विवाह गर्नको लागि केटीको घरमा ७ वटा गाईगोरु अनिवार्य र केही बाखाहरू लैजानुपर्छ । विवाहमा गोरु मार्छन र सामूहिक रूपमा भोज गरेर खुसी मनाउँछन् । हाल केन्यामा अत्यधिक एड्स फैलिएकाले विवाह गर्नुअघि एच्० आई० भी० पोजेटिभ भएनभएको ३ पटकसम्म स्वास्थ्य परीक्षण गर्नुपर्दछ । उक्त परीक्षणमा एच्० आई० भी० पोजेटिभ नदेखिएमा मात्र विवाहको लागि सरकारले अनुमति प्रदान गर्दछ । साम्बुरू जातिको मृत्यु संस्कार पनि निक्कै रोचक छ । परिवारमा कसैको मृत्यु भएमा त्यो लासको कपाल खौरिन्छ र छोराछोरी श्रीमतीको पनि कपाल खौरिन्छन् र उप्रान्त सम्बन्ध समाप्त भएको मान्यता राख्दछन् । त्यसपछि लासलाई निश्चित ठाउँमा गाड्छन् ।

आफ्नै साम्बुरू भाषालाई माया गर्ने यी जातिको आफ्नै लिपिचाहिँ छैन र अङ्ग्रेजी लिपिलाई नै प्रयोग गर्छन् । साम्बुरू भाषामा बुबालाई पापा, आमालाई ययियो, दूधलाई कुले, आगोलाई निकिमा र नमस्तेलाई सोवा भन्दछन् । आफ्नै संस्कार संस्कृतिमा रमाउने यी जातिको आफ्नै स्वाभिमान छ र ज्यादै रमाइलो संस्कार संस्कृति छ । विदा पाउँ । सोवा ।

*१२ नोभेम्बर ०६*
*नान्युकी, केन्या*





## डायास्पोराको जङ्गलमा देश खोजिरहेका विश्वासदीपप्रति

डा. गोविन्दराज भट्टराई

चारवर्ष पहिले **गृहयुद्धका पीडा** लिएर आएका विश्वासदीप तिगेला यसपालि अर्को कृति **देश बोक्नुको पीडा** लिएर आएका छन् । दुवै कृति नियात्रा निबन्ध हुन् । अघिल्लो कृतिबारे मैले **उत्तरआधुनिक ऐना** (२०६२) मा समीक्षा चर्चा प्रस्तुत गरेको छु भने यस रचनामा **म देश बोक्नुको पीडा**को परिचय गर्न चाहन्छु ।

सर्वप्रथम त विश्वासदीपको लेखकीय चेतना र साधना अनि शक्तिको नेपाली साहित्यले प्रशंसा गर्दछ। विदेशमा सैन्य सेवामा रहेका व्यक्ति तिगेलाले आफैं सुन्दर सिर्जना गर्ने र अरुलाई पनि प्रेरित गर्ने काम गरिरहेका छन् । नेपाली साहित्यको समृद्धिमा यिनले योगदान पुऱ्याइरहेका छन् ।

आज आएर नेपाली साहित्यको स्वरूप र दिशा परिवर्तित हुँदैछ । अवको समय बिस्तृत, व्यापक र ग्लोबल भएकाले हाम्रा साहित्यकार अथवा पाठकले एउटा सीमित क्षेत्रको, देश भित्रको मात्र सिर्जना पढेर पुग्दैन । देश बाहिर के लेखिँदैछ, कोको सिर्जनामा लागेका छन्, कसरी ती अघि बढिरहेका छन् भन्ने कुराको पनि जानकारी राख्नु पर्दछ । देशबाहिर बसेर लेखिएका रचनामा केकस्तो विशेषता पाइन्छ त्यो पनि थाहा पाउनु पर्दछ । विश्वग्रामीकरणले सीमित पारेको जगतमा के कस्ता भूगोल र संस्कृति छन्, कस्ता इतिहास र साहित्य छन्, ती बुझ्नु आवश्यक छ । त्यहाँ नेपाली कसरी बसेका छन्, तिनीहरूको मानसिकता के कस्तो छ, सो कुरा बुझ्नु आवश्यक छ । त्योभन्दा पनि महत्वपूर्ण कुरा के छ भने अन्य भूगोल, संस्कृति, भाषा



भूगोल, संस्कृति, भाषा र सभ्यताका मानिसका बारेमा ज्ञान हुनु अत्यावश्यक छ । नत्र हाम्रो ज्ञानको सीमा साँघुरिने छ । विश्वासदीपले यस्तो ग्लोबल ज्ञानलाई विस्तार गर्ने काम गरेका छन् ।

अहिले बाहिरी मुलुकतिर पसेकाहरूले आफ्नो देशबाट टाढा भएको र नौला परिवेश भोग्नु परेको परिस्थिति लेखिरहेका छन् । बाहिरी परिस्थितिको बसाइलाई डायास्पोरा भनिन्छ । अब नेपाली साहित्यभित्र पनि डायास्पोरिक लिटरेचरले स्थान पाउन थालेको छ । गतवर्षदेखि गरिमाले एउटा स्तम्भ नै मासिकरूपमा डायास्पोरालाई छुट्याएको छ । उता अन्तर्राष्ट्रिय नेपाली साहित्य समाजले यो वर्षदेखि डायास्पोरा पुरस्कार प्रदान गर्न थालेको छ । डायास्पारिक चित्र र चरित्र बोकेका कृतिहरू आउन थालेका छन् । होमनाथ सुवेदीको उपन्यास **यमपुरीको महल** (२०६४) एक उदाहरण हो । हङ्कङ्बाट, बेलायतबाट, अमेरिकाबाट प्रकाशित अनेक कृति पूर्वी यूरोप, पश्चिमी एसिया, अफ्रिका अनेक भूभागबारे अनेक कृति प्रकाशित भइरहेका छन् । तीमध्ये एउटा हो विश्वासदीपको प्रस्तुत कृति । यो भिन्न डायास्पोराको चित्र हो ।

**देश बोक्नुको पीडा**मा नौवटा निबन्ध सङ्कलित छन् । तीमध्ये पहिलो छ *सधैं मन घोच्ने केही गुनासाहरू* । यो रचना नेपालकै परिवेशको छ– अन्तर्राष्ट्रिय एअरपोर्टको । त्यहाँ भएका पुराना कर्मचारी, तिनको पुरानो मानसिकता, तिनीहरूको आलश्य र अकर्मण्यता अत्यन्तै दुःख लाग्दा छन् । तिनीहरूको आलश्य र जुम्स्याइँ, त्यहाँको अव्यवस्था, ढिलासुस्ती र सुविधाको अभाव देख्ता र भोग्दा लेखकलाई दुःख र पीर लाग्छ । दिग्दारी र चिन्ताले छोप्छ । हवाइअड्डा भनेको सम्पूर्ण विदेशीले सम्बन्धित देशकोबारेमा पहिलोपल्ट अनुभव गर्ने स्थान हो, प्रवेशद्वार । त्यहाँबाटै त्यस्तो अनुभव लिनु पर्दा विदेशमा हाम्रो कस्तो सन्देश पुग्ला भनी लेखक चिन्तित छन् । यो स्वाभाविक चिन्ताको अनि लज्जाको विषय हो ।

दोस्रो निवन्ध छ *कोसोभो यात्रा : जिउँदी आमाको चिहान तयारी*। यो एउटा उत्कृष्ट रचना हो *मर्मश्पर्शी पनि*। यसमा १९९० पश्चात यूगोस्लाभिया टुक्रिएपछिका विभिन्न देशले भोगेको स्थितिको संकेत छ। प्रस्तुत रचना कोसोभोमा केन्द्रित छ त्यहाँको जातीय, भाषिक र धार्मिक विखण्डनका स्थितिहरूको भयावह चित्र प्रस्तुत भएको छ। जीवनको मूल्य समाप्त छ, मानवीय संवेदना समाप्त छ; भय, त्रास, असुरक्षा र मृत्यूले ढाकेको छ। यसको एउटा उदाहरण जिउँदै आमाको चिहान खनेर एउटा छोरो उनको मृत्यूको प्रतीक्षा गर्दछ।

तेस्रो रचनामा निबन्धकार कोसोभोबाट केन्यातिर लाग्दछन्– *केन्या यात्रा एउटा सुन्दर क्षणको अन्त्य*मा। अफ्रिकाको केन्या भूमी सुक्खाले ग्रस्त छ। जनता गरिबीले आहत छन्। हरेक अवस्थामा लेखक अरुको परिस्थितिसँग आफ्नो तुलना गर्दछन्। त्यहाँका गोठालाहरु देख्ता आफ्नै बाल्यकालमा गोठालो गएको, दुखी छाप्रामा पढेको वा बसेको सम्झना हुन्छ। धेरै चरित्रमा केन्या पनि नेपाल झैँ देखिन्छ। बिजुलीका खम्बा छन्, तार चुँडिएका। एड्सले प्रत्येक छमध्ये एक व्यक्ति ग्रस्त छ। कृषि र पशुप्रणाली उस्तै, पछौटेपन उस्तै। तिगेलाको निरीक्षण शक्ति अति सुक्ष्म र तीव्र छ। उनको तात्कालीनता प्रशंसनीय छ– यो घटनाको उनले जहाजमै लेखे।

चौथो निबन्ध छ *गरीब देशको नागरिक हुनुमा बढी मानवता*। उनी वेलायतको गाँउगाउँमा पुग्छन्। त्यहाँका खेतीपातिमा डुबेका कृषक देख्ता आफ्नै बाल्यकालको सम्झना गर्छन। दुखी समाजमा हुर्केका उनी बाल्यकालको अभाव र कष्ट सम्झिन्छन्– पढ्ने इच्छा थियो, टुकी बाल्ने मट्टीतेल फारो गर्नु पर्थ्यो। आज उनले तिनै कुरा लेख्तैछन्। अतीत र वर्तमान मिसाएर एउटा फ्युजन तर लेख्नु सजिलो छैन। लेख्तालेख्तै सिर्जनामा लागेकैले आज उनीहरुको पल्टनमा पनि एउटा माहोल बनेको अनुमान गर्न सकिन्छ। लेखनकै क्षेत्रमा विभिन्न गोष्ठीमा भाग लिने अवसरसमेत उनले पाएका छन्। दुखबाट उठेका जीवनमा धेरै उपलब्धी छन्। यो सम्झेर उनलाई ढुक्क पनि लाग्छ।



पाँचौ निबन्ध छ मलेसिया यात्राको– *गुफाको राजधानी मुलु यात्रा*। त्यहाँ पुग्दा आफ्नो गाउँको थामडाँडा पुगेझैँ हुन्छ। त्यहाँको अवस्था देख्दा पनि आफ्नै देशको गतिको सम्झना हुन्छ– अझ दुर्गतिको। हत्या हिँसाले देश समाप्त छ।

मनमा देश विकासको तरङ्ग उठाउँदै सारवाक क्षेत्रमा जान्छन्, त्यहाँ विश्वप्रसिद्ध गुफाको अवलोकन गर्छन्, स्थानीय बासिन्दाको जीवन शैली टिपेर फर्किन्छन्।

छैठौँ निबन्ध *देश बोक्नुको पीडा*। यो शीर्षकबाटै पुस्तकको नाम रहेको छ। यस निबन्धले पनि अन्तर्राष्ट्रिय जगतमा नेपाली जातिको छबि धमिलो हुँदै गएको, नेपालीले हिनत्व भोग्नु परेको कुरा प्रकट गरेका छन्। त्यसै गरी सातौं निबन्ध *राम्रो सपना देखेको रात*मा पनि लेखक केन्यामा छन्। अतीत स्मरणले उनलाई झस्काउँछ; उनी भावुक बन्छन्। त्यहाँको जीवन निम्न गर्तमा डुबेर एड्सले निलेको, गरीबी र अन्धकारले खाएको देख्तछन्। यो मानव सभ्यताकै लज्जास्पद पराजय लाग्दछ। यो पीडादायी चित्र उनी अँध्यारामा बसेर टर्चको सहायताले लेख्छन्। कति गाह्रो छ सिर्जना गर्नु ! एउटा सपना देख्छन् : त्यो आफ्नै देशको उन्नतिको हुन्छ। यसरी सपना बिपना सबै देशकै उन्नतिको सम्झनामा समर्पित तिगेला यसकै चिन्ता र पीर बोकेर हिँड्छन्, लेख्छन्। त्यही हो उनको देश बोक्नुको पीडा।

आठौँ निबन्ध छ *बेलायतमा खुसीको सपिङ*। यसमा बेलायतको बजार, त्यहाँका नेपाली र त्यहाँका बसाइको विशेषता उतार्छन् भने अन्तिम निबन्ध छ *अफ्रिकाका साम्बुरु जातिको परिचय*।

नेपाली साहित्यका केन्द्रहरु परिवर्तित हुँदैछन्। नयाँ केन्द्र बन्दैछन्। ती अनेक डायस्पोरा हुन्। विश्वासदीपले एउटा विशेष खण्डको, अरु नेपालीले नलेखेका भूभागको, त्यहाँका बासिन्दाका जीवन र तिनका संस्कृतिको चित्र प्रस्तुत गरेका छन्। यो डायस्पोरिक चित्र हो, नवीन जो अति महत्वपूर्ण छ।

नेपाली यात्रा-संस्मरण साहित्यमा तिगेलाले आफ्नो स्थान सुरक्षित राखेका छन्। उनी भित्र एउटा स्थिर लेखक उदाइसकेको छ। उनमा परिस्कार छ, नवीनता छ र फ्रेशनेस। हरेक ठाउँमा उनी इमान्दार छन् र हरेक पल देशको उन्नतिको चिन्तामा छन्। यस्ता तिगेलाको *देश*

*देश बोक्नुको पीडा* अत्यन्तै नौलो र पठनीय यात्रा निबन्धसङ्ग्रहको नेपाली वाङ्मयमा स्वागत गर्दछु ।

*(शनिवार २६ असौज २०६४ का दिन बानेश्वर, काठमाडौं स्थित रारा कम्प्लेक्समा कृति विमोचनका अवसरमा पाठ गरिएको)*

Website: www.gorkhapatra.org.np

THE FIRST AND THE FOREMOST

# The Rising Nepal

NATIONAL DAILY

BUSINESS Page 7 — INDIAN RUPEE IN UNCOMFORTABLE ZONE





NATION Page 3 — DESH BOKNUKO PIDA MADE PUBLIC



WORLD Page 5 — HAITI FLOODS LEAVE 45 DEAD



Vol. XLII ▪ No. 297 ▪ Kathmandu ▪ October 14, 2007 ▪ Asoj 27, 2064 ▪ Nepal Sambat 1127 ...

## Desh Boknuko Pida made public

By A Staff Reporter

KATHMANDU, Oct.13: *Desh Boknuko Pida*, a collection of travel essays written by Bishwas Deep Tigela was released Saturday in the capital.

Professor Govinda Raj Bhattrai released the work. Speaking at the release of the book he said that it was honour for Nepalese literature to get this type book.

He said that diasporic writing had widened the literary creativity and interest throughout the world. The non-residential Nepalese have made an important impression in the world of literature, he added.

Author of the book said that it was his exotic personal experience and he was inspired by criticism on his earlier work *Griha Yuddoko Pida*.

He further said that the book is a portrayal of the transitional period towards CA polls.

The book contains nine essays based on his personal experience.

Commenting on the book, essayist Yuva Raj Nayaghare said that such precious writing in the field of Nepalese literature was the right means to enrich Nepalese literature.



*Noted literary critic Dr. Govinda Bhattarai releases a book 'Desh Boknuko Pida' by Bishwas Deep Tigela in Kathmandu, Saturday.* Photo: Sabin Tuladhar

Meanwhile RSS adds: In Madhyapur, Thimi, the Bhaktapur Literary Society has honored three people for their contribution in art, literature and music yesterday.

Those honored were Chandrakala Newar, Kedar Joshi and Jujukaji Ranjit.

Newar was honored for contribution in literature and language, Ranjitkar for music, and Joshi for art and were presented doshallas and copper plaques.

Meanwhile, a science and technology exhibition was organized by the students in Balkot English School yesterday.

They had put on display energy saving devices, temperature measuring technology, water heating on paper and photosynthesis method.

They also presented songs with their own music and exhibited art and photographs.

---

कान्तिपुर पोष्ट, आइतबार, २७ असोज २०६४ ३

## देश बोक्नुको पीडा विमोचित

**काठमाडौं :** नियात्राकार विश्वासदीप तिगेलाद्वारा लिखित 'देश बोक्नुको पीडा' नियात्रासंग्रहको शनिबार विमोचन गरिएको छ। कृतिको विमोचन प्राध्यापक डा. गोविन्दराज भट्टराईले गर्नुभएको हो। प्रा.डा. भट्टराईले विदेशबाट नेपाली लेखकको आगमन लोभलाग्दो भएर आएको बताउनुभयो। उहाँले यस्तो आगमनले निरन्तरता पाए नेपाली साहित्यको भण्डार समृद्ध हुने बताउनुभयो। कवि श्रवण मुकारुङको सभापतित्वमा सम्पन्न उक्त कार्यक्रममा कृतिका लेखक विश्वासदीप तिगेला, नियात्राकारहरू अमर नेम्बाङ र युवराज नयाँघरे पनि मन्तव्य व्यक्त गर्नुभएको थियो।

---

गोरखापत्र

२०६४ साल असोज २७ गते आइतबार

Sunday, October 14, 2007 ५

## विश्वास दीपको 'देश बोकिनुको पीडा' सार्वजनिक

*गोरखापत्र समाचारदाता*

काठमाडौं, असोज २६ गते। देशबाहिर जाँदा भोग्नुपरेका पीडा समेटेर नियात्राकार विश्वास दीप तिगेलाले तयार पार्नुभएको कृति 'देश बोक्नुको पीडा' आज सार्वजनिक गरियो। कार्यक्रमका प्रमुख अतिथि वरिष्ठ समालोचक एवम् निबन्धकार डा. गोविन्दराज भट्टराईले उक्त कृति आज यहाँ सार्वजनिक गर्नुभएको हो।



अनलाइन नेपाल साहित्य मञ्चद्वारा आयोजित उक्त कार्यक्रममा डा. भट्टराईले साना-साना अनुभूतिलाई पनि टण्ण टण्ण टिपेर राख्नसक्ने नियात्राकारको विशेषता रहेको बताउनुभयो। उहाँले नेपाली साहित्यमा केही वर्षदेखि नेपालबाहिर बसेर सिर्जिएका कृतिहरू प्रकाशन हुने क्रम बढेको बताउनुभयो।

युवाकवि एवम् गीतकार श्रवण मुकारुङको सभापतित्वमा सम्पन्न सो कार्यक्रममा नियात्राकार विश्वास दीपको आफूले कोसभोमा विदेशी सैनिक साथीबाट आफ्नो देशबारे नकारात्मक कुरा गरेको सुनी मर्माहत भई देश बोक्नुको पीडा लेखेको बताउनुभयो।

समारोहमा सार्वजनिक कृतिबारे निबन्धकार युवराज नयाँघरे, अम्बर नेम्बाङ र रमेश पौडेलले बोल्नुभएको थियो।

'गृहयुद्धका पीडा', 'देश बोक्नुको पीडा', 'बनियो परिचय' जस्ता कृतिका स्रष्टा विश्वास दीपको पछिल्लो कृति 'देश बोक्नुको पीडा' मित्र कोसभो, केन्या, बेलायत, ब्रुनाई र मलेसियामा लेखकले प्रत्यक्ष देखे भोगेका कुरालाई नौवटा नियात्राको रूप दिनुभएको छ।